as most dedicatory inscriptions are incised on the front, rather than the rear, except in the case of smaller later bronzes, where often the inscription is found on the empty rear of a lotus pedestal. If the Licchavi inscription was originally on the front, then we must assume that at some point (perhaps in 1279) the position of the Buddha was reversed on the base and the new inscription carved. Because of the difference in the condition of the two inscriptions, this would appear to be less likely than the possibility that we see the Buddha today in the same relationship to its stone base as was the case when it was first made and consecrated. Furthermore, the Licchavi inscription is carved on an elevated section of the stone base just behind the Buddha's feet; had the inscription been in front, it would have hidden the feet of the sculpture.

In all cases where a sculpture is attached to a separately made base with an inscription, it is prudent to question whether they were made at the same time. It is partially this healthy skepticism that has created some controversy surrounding the origin of the Cleveland Buddha (cf. fig. 6). Technical analysis revealed that the sculpture and the base appear to be separate castings, allowing the supposition that the sculpture was made in India while the inscription on the base is clearly Nepalese: art historians remain divided as to whether the image itself (as opposed to the base) is of Indian or Nepalese origin.

The same uncertainty is true with the Guita Buddha: unfortunately it has not been possible to make a detailed close-up examination of the sculpture itself or of the base and the connection of base and sculpture. It is primarily this uncertainty that may lead scholars to hypothesize that the second option or third options we have presented is correct, that the Buddha we now see, while certainly of a style older than the inscription of 1279, must be later than the original Licchavi inscription, and is a replacement of a later period. While this remains a possibility, it would seem strange that a further consecration of the original figure, of such an extraordinary size and presence, would have been consecrated on the same base as the original, without commemorating the replacement in some way in another inscription that would have been passed down.

In 2010, Mary Slusser, the author of the 1975 article examining the antiquity of Nepalese metalcraft, presented evidence via radiocarbon testing that we have long underestimated the age of some of the greatest wood sculptures of the Kathmandu valley. Her reassessment brought the earliest wooden sculptures back from the previously earliest envisaged date of the 13th century by some 5 to 6 centuries, with the earliest wooden struts being dated by C14 to the period of CE 660-860, and two free standing sculptures even earlier, to ca. 531-680 (Slusser, 2010) .

We feel a similar reassessment may now be due for the dating of metal sculpture as well. If the Guita Buddha is indeed the bronze statue commissioned by the pious monk Yaśomitra in 542, then we must reassess the age of several of the other sculptures we have reviewed above and in the online complete version of this article.

One of the greatest and earliest metal sculptures of Nepal has been hidden in its late medieval disguise for centuries: the magnificent "bronze image of Lord Buddha" of Guita Bahi.

**Selected References:** (please visit https://asianart.com/articles/guita for a full bibliography and notes)

Rajbanshi, Shyam Sundar, 2016, "Pātan guitabahīko aprakāśita licchavikālakā abhilekha. (Unpublished inscription of Licchavi Period from Patan Guita Bahi)". Abhilekha (National Archives, Kathmandu), No. 33 (VS 2072), pp. 74-76.

Rajbanshi, Shyam Sundar, 2017. Patan guitalabahīko licchavi caitya abhilekhako pariskrta pātha (Refined text of the Lichhavi Caitya inscription of Guita Bahi, Patan), Abhilekha (National Archives, Kathmandu) no. 35 (VS 2074/2017 CE) pp. 91-94.

Slussser, Mary Shepherd, 1975, "On the Antiquity of Nepalese Metalcraft", Archives of Asian Art, XXIX, pp 80 -94

Slusser, Mary Shepherd, 2010, The Antiquity of Nepalese Wood Carving: A Reassessment, (Seattle: University of Washington Press)

हेराकाजी वज्राचार्य (अन्वेषक) गुइत:या भी विहार संघ (गुस्ताला मह(ाविहार, प्रथामश्री महाविहार, वसूच्चशील महाविहार) छ्गू अध्ययन ने सं १११९, यल (दीपवती पुस्तकालय, गुइत, यल )

Vajracarya, Herakaji, 1999 (N.S. 1119) Guitahyā Bahi Vihāra Sangh (Gustala Mahāvihāra, Prathamaśrī mahāvihāra, Vasuccaśīla Mahāvihāra chagū adhyayana (A study of the Guita Bahi vihāra Sangha) (Guita, Patan: Dipavatī Putsakālaya)

von Schroeder, Ulrich, 2019, Nepalese Stone Sculptures, two vols, vol II, Buddhist (Weesen, Switzerland: Visual Dharma Publications)

**List of Illustrations:**

1. Śākyamuni Buddha, as Dīpankara
The main deity of Prathama Śrī Mahāvihāra
(Prathamaśrī mahāvihārayā gandhurī devatā)
Cast Copper with traces of gilding, with gilt repousse copper covering.
h. approx 6 ft 8 in (Vajracarya, Herakaji, 1999, p 53)
Nepal, 542 CE (?)
Gilt repousse covering ca. 18th 19th c.
Shown with gilt repousse covering as Dīpankara

Photo courtesy Gyanendra Shakya

2. Śākyamuni Buddha
The main deity of Prathama Śrī Mahāvihāra (Prathamaśrī mahāvihāra gandhurī devatā)
Cast Copper with traces of gilding, with gilt repousse copper covering removed, but repousse sleeves on left and right arms still in place; note the crown to the left of the base.
h. approx 6 ft 8 in (Vajracarya, Herakaji, 1999, p 53)
Nepal, 542 CE (?).

Photo: Ian Alsop, Feb. 4, 2008

3. Inscription on the stone pedestal of Śākyamuni Buddha
Nepal, inscription dated NS 399, 1279 CE
on the front of the pedestal of the main deity of Prathama Śrī Mahāvihāra. (Prathamaśrī mahāvihārayā gandhurī devatā)
photo Ian Alsop, November 19, 2017

4. Discovery of Licchavi inscription SS 464 = CE 542

on the back of the pedestal of the main deity of Prathama Śrī Mahāvihāra. (Prathamaśrī mahāvihārayā gandhurī devatā)

a photograph taken on March 6, 2016 after the original discovery of the Licchavi inscription, Photograph courtesy Ram Shakya and Gyanendra Shakya, March 6, 2016

5. Licchavi inscription at present
This photo shows the window built into the rear wall of the shrine so that the inscription on the rear of the base of the sculpture of Śākyamuni can be viewed by visitors in the circumambulation corridor.
Photo Ian Alsop November 19 2017

6. Standing Buddha
Northeastern India or Nepal, Gupta/Licchavi Period
Inscription dated Śaka Samvat 513, 591 CE
Bronze
Overall: 46.5 x 15.4 x 13.4 cm (18 5/16 x 6 1/16 x 5 1/4 in.); without base: 35 x 13.8 x 10.5 cm (13 3/4 x 5 7/16 x 4 1/8 in.)
The Cleveland Museum of Art, Cleveland, OH
Purchase from the J. H. Wade Fund 1968.40

Photo: courtesy Cleveland Museum of Art
https://cmaweb23-bbn-2.clevelandart.org/art/1968.40

7. Standing Buddha Śākyamuni
Gilded copper
7th century, Licchavi Period (400-750)
Nepal
19 3/4 x 8 x 3 3/8in. (50.2 x 20.3 x 8.6cm)
Kimbell Art Museum
AP 1979.01
purchased by Kimbell Art Foundation, Fort Worth, 1979

Photos courtesy Kimbell Art Musuem
https://www.kimbellart.org/collection/ap-197901
© Kimbell Art Museum

8. Standing Buddha
Nepal, circa 8th century
Copper without traces of gilt
135 cm.
Gum Vihāra, Vajryoginī Buddhist temple compound, near Śānkhu, Kathmandu valley
Photo: Ulrich von Schroeder, 25 June, 2017 (Nepalese Stone Sculptures-SD card)



1. Guita Buddha as Dipankara



2. Guita Buddha without repousse



3. Inscription NS 399, 1279 CE



4. Discovery of Licchavi inscription SS 464 = CE 542

फोटो साभार : राम शाक्य

# बहाबहिको सर्वप्राचीन अभिलेख
## (गुइत:बहिको ६ औं शताब्दिको लिच्छिवि अभिलेख)

✍ सम्पादक

इतिहासको प्रमाणका रूपमा वंशावली, हस्तलिखित पाण्डुलिपि, शिलालेख, कलाकृति, सांस्कृतिक परम्परा, किंवदन्ती आदि विभिन्न स्रोतहरू रहेका हुन्छन् । ती मध्ये तुलनात्मक रूपले शिलालेखलाई विश्वसनीय स्रोतका रूपमा लिइन्छ । नेपालको राजनैतिक इतिहास गोपालवंश, महिषपालवंश देखि सुरु भएको कुरा वंशावलीमा भएको भएतापनि शिलालेख प्रमाण अनुसार नेपालको राजनैतिक इतिहास लिच्छिविकाल देखि मात्र उपलब्ध छ । नेपालको सबैभन्दा प्राचीन अभिलेख त लुम्बिनीको ई.पू. तेस्रो शताब्दिको अशोक स्तम्भाभिलेखहरू नै हुन् । त्यसपछिका उपलब्ध शिलालेख भनेको इ.सं. १८५ देखिका लिच्छिवि शिलाभिलेखहरू हुन् । नेपालको बुद्धधर्म र बौद्ध विहारको इतिहास पनि बुद्धकालदेखि नै जोडिएको भएपनि शिलाभिलेखले प्रमाणित भएको इतिहास लुम्बिनी स्तम्भाभिलेख पछि काठमाडौं उपत्यकामा विभिन्न स्थानहरूमा रहेका लिच्छिवि शिलालेखहरू नै हुन् । बहाबहि सम्बन्धी सबैभन्दा प्राचीन शिलालेख कुन होला ? कहाँ होला? त्यसमा के लेखेको होला? यी प्रश्नहरू सबै नेपालीहरूका लागि एक रोचक जिज्ञासा हुन सक्छ । यो लेखमा यही प्रश्नलाई समाधान गर्ने जमर्को गरिएको छ ।

नेपालमा बुद्धधर्मको प्रारम्भ बुद्धकालदेखि नै भएको कुरा त्यस बेला भिक्षु आनन्द र श्रावस्तीका भिक्षुहरू ऊन व्यापारीहरूसँग नेपाल आएको प्रसङ्ग मूलसर्वास्तिवादी विनयमा उल्लेख भएकोबाट थाहा हुन्छ । (Slusser, 1998 - pg 271; वज्राचार्य, २०३० - पे. १७२)। प्रत्यक्ष रूपमा किराँतकालका कुनै पनि अभिलेख प्राप्त नभएपनि वंशावली आदिका प्रमाणले सम्राट अशोक नेपालमा आगमन भएको, चारूमती विहार निर्माण गरेको कुराबाट किराँतकालमा नै यहाँ विहार निर्माणको गतिविधि सुरु भइसकेको कुरा दर्साउँछ । अभिलेख प्रमाण नै खोज्ने हो भने लिच्छिवि अभिलेखमा उल्लेख भइरहेका 'गुँविहार' भन्ने शब्द संस्कृत मूलबाट नभएकोले यो विहार लिच्छिविकाल भन्दा अघि नै निर्माण भइसकेको हुनुपर्छ भन्ने भनाई इतिहासकारहरूको छ (Slusser,1998 - pg 10, वज्राचार्य, २०३० - पे. ४६०)। अभिलेख प्रमाणहरू भएको काल भन्नु लिच्छिविकालदेखि मात्र नै हो । हालसम्म प्राप्त करिब २०० ओटा जति लिच्छिवि

अभिलेखले नेपालमा यो कालखण्डमा महासांघिक भिक्षुसंघ रहेको, भिक्षुणी संघ रहेको, विहारका लागि राजाहरूले गाउँहरू दान गरेको सहित अनेकौं विहारहरूको नाम उल्लेख गरेका छन् । यी मध्ये गुँ विहार, मान विहार, राज विहार, खर्जुरिका विहार, मध्यम विहार, शिवदेव विहार, अभयरूची विहार, वार्त कल्याणगुप्त विहार, चतुर्भालटसन विहार, अर्जिका विहार, जीववर्म विहार, पुष्पवाटिका विहार, वार्त सुजातप्रभ विहार मुख्य विहारहरू हुन् । यी मध्ये धेरै जसो विहारहरू आज के अवस्थामा छन् ? कहाँ छन् ? भन्ने कुरा रहस्यको गर्भमा नै छ । इतिहासकारहरूले विभिन्न किसिमले अनुमान प्रमाणका विधिहरूद्वारा यी विहारका स्थान अनुमान गरेका छन् तर यसको स्पष्ट किटानी गर्न आजसम्म सकेको छैन ।

काठमाडौं उपत्यकामा रहेका कयौं बहाल बहिलहरू लिच्छिविकालमा नै बनाइएका हुनसक्ने कुरा यहाँ भएको मूर्तिकला, चैत्यको शैली, वंशावलीका उल्लेखहरूबाट इंकित भइरहेको छ । तर अभिलेख प्रमाण नै रहेको विहार गुइत: बहि र इबहि मात्र हो । यी बाहेक निम्नानुसार सूचीमा समावेश भएका अरू अभिलेखहरू चैत्याभिलेख, ज:ह्रुँ अभिलेख, मण्डल अभिलेख मात्र भएकाले यिनीहरूलाई विहारसँग प्रत्यक्ष सम्बन्ध रहेको ? वा नरहेको ? भन्ने कुरा यकिन गर्न गाह्रो छ ।

नेपालको राजनैतिक इतिहास हेर्दा आजसम्मको मितिमा लिच्छिवि शिलाभिलेखहरू मध्ये सबैभन्दा पहिलो शक सम्वत् १०७ (इ.सं. १८५) अंकित जयवर्माको पादपीठ अभिलेख हो (Mishra, 2000) । यस भन्दा पछिका धेरै शिलालेखहरू नेपालको बुद्धधर्मको इतिहासका प्रमाणका रूपमा छन् । यी ललितपुरका बहाल बहिलको वरिपरि पाइएका लिच्छिवि अभिलेखहरूको विवरण निम्नानुसार छन् ।

१. प्रथम श्री महाविहार नामले प्रख्यात गुसटल महाविहार[1] (तधँ गुइत: बहि) को बुद्ध मूर्ति पादपीठ अभिलेख - शक सम्वत् ४६४ (इ.सं. ५४२)
२. सुबहाल हिटीको लिच्छिवि चैत्यको अभिलेख - मानदेव सम्वत् १८२ (इ.सं. ७५८) (Vajracharya, 1973)
३. सुबहाल हिटीको ज:ह्रुँको अभिलेख - मानदेव सम्वत् १८७ (इ.सं. ७६३)
४. गुस्तल महाविहार (चिधँ बहि) को चैत्यको पादपीठ अभिलेख - सालमिति उल्लेख नभएको
५. रक्षेश्वर महाविहार (पुच्व बहि) को बुद्धस्तुति अंकित मण्डल अभिलेख - सालमिति उल्लेख नभएको
६. यम्पि महाविहार (इबहि) को करूणाचुक सँगै ज:ह्रुँमा भएको ‘वार्त्त सुजातप्रभविहार’ उल्लेख गरिएको अभिलेख - सालमिति उल्लेख नभएको
७. त्यागल टोलको चैत्यमा ‘ये धर्मा हेतु प्रभवा...’ गाथा उल्लिखित अभिलेख - सालमिति उल्लेख नभएको

यस बाहेक यंगुबहाल र चपट टोलको लिच्छिवि अभिलेखहरू पनि बौद्ध इतिहास अध्ययन गर्नेहरूले नहेरी नहुने अभिलेखहरू हुन् । यी बाहेक काठमाडौं, ललितपुर र भक्तपुरको बहाल बहिलमा भेट्टाइएका अभिलेखहरू सबै मध्येकालका हुन् । प्रथम श्री महाविहार (तधँ गुइत:बहि) को मूल गन्धकुटीको बुद्धमूर्तिको पादपीठ अभिलेख मिति २०७२ साल फागुन २३ का दिन फेला परेपछि काठमाडौं उपत्यकाका बहाल बहिलमा भएको अभिलेखहरू मध्ये यो अभिलेख सबैभन्दा अघिको अभिलेखका रूपमा यसले कीर्तिमान कायम गरेको छ ।

**अभिलेखको उत्खनन**

प्रथम श्री महाविहार (तधँ बहि) को मन्दिर पुन:निर्माणको क्रममा गन्धकुटीको गारो भत्काउने क्रममा बहिलको मूल गन्धुरी देवताको पादपीठ


चित्र नं. १ अभिलेखको छापा लिइरहेको

शिलाको दक्षिणतिर अर्थात् देवताको पछाडिको भागमा कोरिएका इसवीको छैठौं शताब्दिको शिलालेख मिति २०७२ साल फागुन २३, आइतवारका दिन भेट्टाइएको हो । यो शिलालेखले बुद्ध धर्म र बौद्ध कलाको इतिहास अन्वेषकहरूका लागि नयाँ सम्भावनाहरू उब्जाइ दिएको छ ।

बहिलको गन्धकुटिको वरिपरि परिक्रमा गर्न मिल्ने गरी प्रदिक्षिणापथ निर्माण गरिएको छ । जीर्णोद्धारको क्रममा प्रदक्षिणापथको बाहिरको गारो वि.सं. २०७२ साल बैशाख १२ को महाभूकम्प भन्दा पहिले नै पुन:निर्माण भइसकेको भएपनि बीचको गन्धकुटिको गारो भूकम्पपछि नै पुन:निर्माणको निम्ति भत्काइएको थियो । यही क्रममा गन्धकुटीको दक्षिणतिरको गारो भत्काउँदा गन्धुरी देवताको मूर्ति बिसाइएको शिलाफलकको पछाडिपट्टि लिच्छिवि शिलाभिलेख भेट्टायो । यही शिलाफलकको अगाडिपट्टि ने.सं. ३९९ को पण्डित गौतमश्री यतीन्द्रका शिष्य क्षान्तिश्रीले विहार पुनर्निर्माण गरेको भनी उल्लेख भएको अभिलेख कुँडिएको छ । यो शिलालेख भएको शिलाफलकको पछाडिको भाग पूर्ण रूपले पुरानो गारोभित्र नै पुरिएको अवस्थामा थियो । विहारको सदस्यहरूले यो अभिलेख प्राप्त भएको बारे पुरातत्त्व विभागका अभिलेख विशेषज्ञ श्री श्यामसुन्दर राजवंशीजी लाई सूचना दिए । अभिलेख भेट्टाएको करिब दुई सप्ताह पश्चात् मिति २०७२ चैत ८ गतेका दिन राजवंशीजी गुइत: बहिलमा गई अभिलेखको उतार लिई राष्ट्रिय अभिलेखालयको 'अभिलेख' पत्रिकामा प्रकाशन गर्नु भयो (राजवंशी, २०७२ - पे ७४०)। यसपछि इयान अल्सोप, लेखक स्वयम्, काशीनाथ तमोट र डा. नयनाथ पौडेल सम्मिलित अन्वेषण टोलीबाट यो अभिलेखको सुक्ष्म अध्ययन गरी यो अभिलेखको परिष्कृत लिप्यन्तर र भावार्थ गरी 'एसियन आर्टस् डट कम' नामक वेभ जर्नलमा प्रकाशित भएको छ (Alsop, 2020; Tamot 2020) ।



चित्र नं. २ अभिलेखको छापा

श्रोत : श्याम सुन्दर राजवंशी

यस शिलालेखको नाप ११२ से.मी. लम्बाई र १३ से.मी. चौडाइ छ । अक्षरहरूको उचाई २ से.मी. देखि ४ से.मी. सम्म छन् । यो अभिलेख पूर्वलिच्छिवि लिपिमा तीन हरफमा लेखिएको छ । हाल रहेको लिच्छिवि शिलाभिलेख हेर्न हुने गरी झ्याल जस्तो बनाइकन गारो पुन:निर्माण भइसकेको छ । कोही पनि इच्छुक व्यक्तिहरू गन्धकुटी प्रदक्षिणा गल्लीमा गई यो शिलाभिलेख हेर्ने वा पढ्न सकिन्छ ।

**शिलालेखको पाठ र भावार्थ**

पूर्व लिच्छिविकालको यो शिलाभिलेखमा शक सम्वत् ४६४ (इ.सं. ५४२) मा धातुको बुद्धमूर्ति यहाँ प्रतिस्थापन गरियो भनी लेखिएको छ । यसको पूर्ण पाठ र भावार्थ यस प्रकार छ । (Tamot & Poudel, 2020)

१. यु देय धर्म्मोयं शाक्यभिक्षो यशोमित्रस्य मातापितरौ पूर्व्वाङ्गमङकृत्वा आचार्य्योपाध्यायानां सर्व्व सत्वानामनुत्तरज्ञानावाप्तयै

२. स्तु १ भट्टारक महाराज श्री रामदेवस्य साग्र वर्षशतं समाज्ञापयत: महासामन्ते महाराज श्री क्रमलील कुशलिनि

३. भगवतो बुद्धस्य काङ्स्यप्रतिमा प्रतिष्ठापिता ० (धर्मचक्रको चिन्ह) मार्ग्गशीर्षे शुक्ल त्रयोदश्याम् संवत् अ-प्क चु प्क (४००±६०±४)

**भावार्थ**

यस दान धर्मको प्रभावले शाक्यभिक्षु यशोमित्रका आमा, बुबा, पूर्व आचार्यहरू र सबै सत्त्वप्राणिहरू अनुत्तर ज्ञान प्राप्त गर्न सकून् । भट्टारक महाराज श्री रामदेव र कुशल चिताउने महासामन्त महाराज क्रमलीलको आज्ञा लिई कास्य बुद्ध प्रतिमा प्रतिष्ठा गरियो । मार्गशीर्ष शुक्ल त्रयोदशी सम्वत् ४६४।

यस शिलाभिलेख राम्रो अवस्थामा सफा र स्पष्ट छ । यो अभिलेखबाट केही निम्नानुसार कुराहरू उजागर भएको छ ।

१. **महायान बुद्धधर्मको प्रमाण** – 'सर्व सत्वानामनुत्तर ज्ञानावाप्तयै' अर्थात् सबै सत्त्वप्राणिलाई अनुत्तरज्ञान (बुद्धत्त्व) प्राप्त होस् भन्ने आशिकाबाट यहाँ महायान बुद्धधर्मको अभ्यास रहेको प्रमाणित हुन्छ ।

२. **शाक्य भिक्षु यशोमित्रको दान** – त्यसबेलाका शाक्यभिक्षुहरू धन सम्पन्न रहेछन् भन्ने कुरा पनि यस अभिलेखले देखाउँछ।

३. **धातुमूर्तिकलाको इतिहासमा सर्वप्राचीन अभिलेख** – 'भगवतो बुद्धस्य काङ्स्य प्रतिमा...' भन्ने उल्लेखले बुद्धमूर्ति कास्य अर्थात तामा वा पित्तलको भन्ने स्पष्ट भयो । यो अहिलेसम्मको एउटै मात्र यस्तो लिच्छिवि अभिलेख हो जुनमा कितानीका साथ धातुकै मूर्ति भनी उल्लेख भएको छ । यो भन्दा अघि बुद्धको धातु मूर्तिको सर्वप्राचीन अभिलेख भनी किम्वेल बुद्धको अभिलेखलाई मानिन्थ्यो । यस अभिलेखले यो सम्बन्धमा पनि नयाँ कीर्तिमान कायम गरेको छ ।

४. **दुई महाराजहरूको नाम एउटै अभिलेखमा** – यसमा 'भट्टारक महाराज रामदेव' र 'महासामन्त महाराज क्रमलील' भनी दुईजना महाराजहरूको नाम उल्लेख भएको छ । यो हेर्दा यस कालमा नेपालमा दुई जना राजाहरूको संयुक्त शासन चलिरहेको देखिन्छ । रामदेव राज्याभिषेक लिई

भएका महाराज हुन् भने क्रमलील महासामन्तका रूपमा शक्तिशाली हुँदै महाराज पदवी सम्म प्राप्त गरेका सफल व्यक्ति हुन् । राजा रामदेव र महासामन्त क्रमलीलको नाम उल्लेख भएको अरू अभिलेखहरू पनि पहिला भेट्टिसकेको छ ।

(यो पूर्व प्रकाशित स्रोतहरूको संकलनको संक्षिप्त प्रस्तुती हो । यसको विस्तृत ब्याख्या र टिप्पणीहरूका लागि राजवंशी (२०७२) र Tamot K. & Paudel, N. (2020) हेर्नुहोला । - सम्पादक)

**सन्दर्भ स्रोत सूची**


राजवंशी, श्यामसुन्दर, २०७२, पाटन गुइतबहीको अप्रकाशित लिच्छिविकालका अभिलेख, अभिलेख पत्रिका, राष्ट्रिय अभिलेखालय, रामशाहपथ, काठमाडौं ।

वज्राचार्य धनवज्र, २०३०, लिच्छिविकालका अभिलेख, नेपाल र एसियाली अध्ययन संस्थान, त्रिभुवन विश्वविद्यालय, किर्तिपुर।

वज्राचार्य हेराकाजी, २०५६, गुइत:या वहि विहार संघ - छगू अध्ययन, दीपावती पुस्तकालय, यल ।

Alsop, I., Tamot, K. & Shakya, G., 2020. **The Standing Buddha of Guita Bahi** in *Asianart.com* [Available online] http://asianart.com/articles/guita/part1/index.html

Mishra, T.N., 2000. **Dated Figure of King Jayavarma, The Tradition of Figure Making and The Historical Importance of This Discovery** in *Ancient Nepal*, Number 146, November, Department of Archaeology, Kathmandu

Slusser, Mary, 1998. **Nepal Mandala: A Cultural Study of the Kathmandu Valley**, Princeton University Press, Princeton, New Jersey.

Tamot K. & Paudel, N. 2020. **The Guita Bahi Buddha Licchavi Inscription** in main article Alsop (2020) as Appendix 1, [available online] http://asianart.com/articles/guita/part1/app8.html

Vajracharya, G.V., 1973. **Recently Discovered Inscriptions of Licchavi Nepal** in *Kailash* Volume 1, Number 2,[Available online] http://himalaya.socanth.cam.


* * *

## गुइत: बहि (गुस्तल महाविहार, चिधं बहि) को १ हरफको लिच्छिवि अभिलेख



गुइत:बहि मध्ये उत्तर पश्चिम पट्टि रहेको हाल गुस्तल महाविहार भनी चिनिने बहिको गन्धकुटि भित्र एक लिच्छिवि चैत्य रहेको छ । उक्त चैत्यमा एक पंक्तिको लिच्छिवि लिपिमा लेखिएका अभिलेख छ । उक्त एक पक्तिको अभिलेखमा ३८ वटा अक्षर रहेको देखिन्छ । अभिलेख पाठले सुरुको भाग र अन्तको भाग पनि हुनु पर्ने संकेत गर्दछ । उक्त अभिलेखलाई श्री शान्तहर्ष वज्राचार्यले पढेर अनुवाद गरी हेराकाजी वज्राचार्यद्वारा लिखित 'गुइत: बहि विहार संघ छगू अध्ययन' पुस्तकमा यस प्रकारले छापिएको छ।

**ते विनयाचार च वानभक्तं भ्रातेनुध्वानजिनदीपा: (?)**
**नवणशल प्रतिमाम चंक्रम्न्ये ३ ये पूजात।**

ती, विनयाचारहरू जिनहरूको मार्ग देखाउने अर्थात् स्वयम्भू ज्योतिरूपको अनुयायी भक्तहरूले

कहिल्यै नाश नहुने (स्वयम्भू चैत्य) को प्रतिमा तीनचोटि घुमेर पूजा गर्नुपर्छ ।

यस अभिलेखलाई पुन: श्यामकृष्ण राजवंशीले पढी विवेचनात्मक विश्लेषण समेत राखी राष्ट्रिय अभिलेखालयको 'अभिलेख' पत्रिका पूर्णाङ्क ३५, २०७४ मा प्रकाशित गरेका छन् । उनले यसलाई निम्नानुसार पढेको छ ।

**...श्रुत विनयाचार क्रसाकं भ्रातानुजेन जिन दीप (क्षे) त्रानुचर शेल प्रतिमामचीकरन्मुक्त प्रसाद...**

कुनै विनय आचरण भएका दाता दाजुभाइले शिलाले निर्मित शिखरकूट चैत्य प्रतिमा स्थापना गर्न लागेकोमा असूल गर्दै आएको कर मिन्हा गर्ने निगाह बक्सेको ...

राजवंशीको व्याख्यामा लेखेका छन् - यो अभिलेखको सुरुको भाग र अन्तको भाग छैन । त्यसकारण खण्डित अभिलेखको हुबहु अर्थ निस्कनु संभव भएन । अभिलेखमा 'शैल'चैत्य र 'प्रतिमा' शब्दको उल्लेख स्पष्ट छ र चैत्य स्वयं पनि शिखरकूट शैलीको रहेको हुनाले अन्यत्रको शिलाखण्ड यहाँ जडिन आइपुगेको तर्क गर्न मिल्दैन । यो कुरो विशेष महत्त्वको विषय मान्न सकिन्छ । अभिलेखको लिपिको प्रथम श्री महाविहारमा रहेको लिच्छिवि सम्वत् ४६४ को राजा रामदेवकालीन अभिलेख र यो अभिलेख लिपि समकालीनता देखिएको हुँदा १०/२० वर्षमात्र अघिपछि हुनसक्ने देखिन्छ । यो अभिलेखको समय ईशाको छैठौं शदीको मध्य तिरको हो भन्न सकिने देखिन्छ ।



*अभिलेख छापा सहयोग : खेमराज शाक्य, न:बहा:*



वज्रावली सफूस च्वयात:गु गौतमश्रीया चित्र

## बंगाल - गुइतः - रिआउ यात्रा याम्ह १३औं शताब्दिया

# पण्डित गौतमश्री



✍ डा. ईयें सिंख्लेर
Nan Tien Institute/The University of Queensland SPHE

सिंगापुरया दक्षिण पश्चिम लागाय् ला:गु रिआउ टापु करिमून बेसरया उत्तरी किनारया डाँडाय् दूगु ग्रेनाइटया लोहँतय् किया त:गु रञ्जना लिपिं च्वयात:गु अतिकं महत्त्वपूर्णगु छगू शिलालेख दु। थ्व शिलालेख छम्ह सिद्धपुरुषया आगमनया विषयस कियात:गु अभिलेख ख:, गुम्हसियागु परिचय थौंतक बाँलाक्क स्पष्ट मजूनि । पूर्व प्रकाशित श्रोत कथं थ्व शिलालेख श्रीविजय कालयागु जूगु व थुकिइ 'गोलयण्ट्रिक' अर्थात् 'खगोलशास्त्रीय यन्त्र दुम्ह' धका च्वया तल धका आख: ब्वना त:गु ख: । थ्व खँ इन्डोनेशियाया आपालं सफूलिइ बारम्बार प्रकाशन जुयाच्वंगु जुल (Brandes 1887:150)। आख:ग्व:यात मखुथे ब्वंगुलिं थुकथं गलत अर्थ जुया च्वँगु यात त्वता आ: पायेछि कथं ब्वनेगु जूगु दु ।

गुलिसिनं थ्व शिलालेखयात गौतम बुद्धयागु हे पदचिन्ह धका तक नं उल्लेख या:गु दु (Caldwell & Hazlewood 1994:475)। तर ग्रेनाइट लोहँया आकार प्रकार स्वय्‌वले थथे पदचिन्ह धका धा:गु खँ नं पाय्‌छि खनेमदु । थुपिं दक्व मध्ये थ्व शिलालेखय् दूगु आख:यात 'गौतमश्री' धका ब्वंगु लिपि व व्याकरण कथं पायेछि खनेदु। थ्व खँ १९ औं शताब्दिया छुँ लेखकपिन्सं न्ह्यब्व:गु ख: (Kern 1917:142; Chatterjee 1933:95–96; चित्र नं ४)। थुकिया आ:तकया सहि पाठ 'महायानिक गौलपण्डितश्री गौतमश्री पादा' अर्थात् 'गौरदेशया महायानिक पण्डित श्री गौतमश्रीया पालि' ख:। (थन 'पादा' धैगु खँग्व: 'पालि' धैगु अर्थय् 'थ्व थासय् बिज्यात' धैगु अर्थ ख:सा, व इले गुरु पण्डितपिन्त नाँया ल्यूने 'पाद' धका आदरार्थी खँग्व तयेगु नं चलन दु। उकथं वसपोलयात आदरभावं 'गौतमश्रीपाद' धका नाँ च्व:गु नं जुइफु ।- भाय्‌लमि) अभिलेखया पाठया बारे आपालं अनुसन्धान जूगु जूसां थुम्ह बंगालया गौरं रिआउ तकया यात्रा याम्ह ख्यातिप्राप्तम्ह पण्डितया म्हसिका आतक पिमब्वनिगु जुल ।

सु ख: ले गौतमश्री ? दक्षिणपूर्वी एसियाया पिनेया स्रोतय् १३ औं शताब्दिइ आपालं सक्रियम्ह व्यक्तित्वया रुपय् उल्लेख जुया च्वंम्ह वसपोल छम्ह

ख्यातिप्राप्तम्ह पण्डित खः। सेन वंशया पतन व मुस्मा तयेगु आक्रमणया कारणं वसपोल हिमालय् पाखे शरण काःवंगु खनेदु। बंगालया अधिकांश भूभागय् आधिपत्य स्थापितया साम्राज्य न्ह्याका च्वंपिं सेनवंशीत मुस्मातयेगु हमलां छिन्नभिन्न जूगु खः । थ्व हे क्रमय् आपालं उगु क्षेत्रयापिं विद्वान् आचार्यपिं पूर्वी भारतं पिहाँ वनेगु इवलय् गौतमश्री नं उपिं नापं हे पिहाँ वना नेपालय् व तिब्बतय् च्वँवंगु खनेदु । अन आपालं तिब्बती व नेवाः शिष्यपिन्त स्यनेकने नं याःगु जुल। तिब्वती गुरुशिष्य परम्पराया अभिलेखय् गौतमश्री दर्जनं मयायेक ग्रन्थया विज्ञ व तान्त्रिक अभ्यासया आचार्य जुया बिज्याःम्ह खः धका उल्लेख जुया च्वंगु दु । वसपोलया परम्परा साक्यापा परम्पराय् थौंतक नं न्ह्यानावयाच्वंगु दनि, थौंतक नं अध्ययन अध्यापन जुजुं वयाच्वंगु दनि। वसपोल संस्कृत भाषां दूगु ग्रन्थ तिब्बती भाषां अनुवाद यायेगुलि नं संलग्न जूम्ह खः । थुजाःगु अनुवादया पुष्पिकाया अभिलेख अनुसार वसपोल गौतमश्री साक्या गुम्बाय् बिज्याःगु उल्लेख दु (Bühnemann 1994:16)।

इ.सं. १२५३ स साक्या परम्पराया दाम्पा कुन्ग द्रक् (དམ་པ་ཀུན་དགའ་གྲགས, १२३०-१३०३) यात गौतमश्री थाय् वना नाप लायेगु व शिक्षादिक्षा कायेत छ्वःगु नं उल्लेख दु । दाम्पां युआन् वंश स्थापना अभियानय् युद्ध ऋद्धि प्रयोग याना मंगोलपिन्त ग्वहालि याःगु व लिपा कुब्लाई खाँया दरवारय् हे सम्मानित पदय् थ्यंगु खँ नं विभिन्न स्रोतय् उल्लेख दु। दाम्पा व गौतश्रीया सम्बन्धया बारे चीनी स्रोतय् उल्लेख जुया च्वंगु दु खः तर थ्व खँ सुनानं वाःमचा । छाय्धाःसा चीनी लवजय् गौतमश्रीयात गुदमशिलि (古達麻室利) धका च्वया तःगु जुया दाम्पायागु जीवनी लेखस थ्व शब्दयात पायुछि कथं मथुइकूगु जुल (Franke 1994:160 n.14)।

गौतमश्री नेपाःया प्राचीन विहार गुइतःबहिलि नं संलग्न जूगु खनेदु (चित्र नं. २)। अद्यापिं विहारया रुपय् सञ्चालन जुया च्वंगु गुइतःबहिस निगू शिलाभिलेखय् गौतमश्रीया नां उल्लेख जुया च्वंगु दु। छगू अभिलेख बहिया गन्धकुटीया मूल द्वःया ने.सं. ३९९ (इ.सं. १२७९) या पादपीठ अभिलेख (चित्र नं. १) खः । थ्व अभिलेखय् गौमतश्रीया शिष्य क्षान्तिश्री नं विहारया पुनर्निमाण याःगु खँ उल्लेख दु । घटनाक्रम स्वयेवले इ.सं. १२५५ या महाभूकम्पं दुना च्वंगु विहार संरचना पुननिर्माण जूगु जुइमा। थ्व अभिलेखया भाषा काव्यात्मक जुया च्वँगु पाखें उगु ईःया शिक्षास्तर विकसित अवस्था दूगु खनेदु । थुकि गौतमश्री यात ‘यतीन्द्र’ अर्थात् ‘सन्तपिं मध्ये नं जुजु’ धका आदरार्थी उपाधि उल्लेख याना तःगु दु ।

मेगु अभिलेख लिच्छिविकालीन चिभाःया क्वफलय् दु। सम्वत् १४४ (वज्राचार्य २०५४:६०, चित्र नं ३) उल्लेख जुया च्वंगु थ्व अभिलेखय् उल्लेख जुया च्वंम्ह पण्डित गौतमश्री व सम्वत् ३९९ या अभिलेखय् उल्लेख जुया च्वंम्ह गौतमश्री छम्ह हे खःला ? धैगु प्रश्न दनी । यदि थ्व सम्वत् नेपाल सम्वत कथं मकासे गौरयागु लक्ष्मण सम्वत् कथं काल धाःसा थ्व अभिलेख इ.सं. १२५० पाखेया जू व। गौतमश्री गौर देशं वम्ह जुया थुकिइ गौरया लक्ष्मण सम्वत् छ्यःगु जुइफु । थथे जुल धाःसा गौतश्रीया जीवनकाल लिसें थ्व साल मिले जूवल । थ्व अभिलेखय् ‘पण्डित...श्रीगौतमश्री’ करिमून अभिलेखया ज्वलाःगु नां उल्लेख जुया च्वंगु दु (चित्र नं. ३)। थुपिं आपालं समानताया कारणं करिमूनया अभिलेखय् उल्लेख जुया च्वंम्ह व थ्व गुइतःबहिस उल्लेख जुया च्वंम्ह व्यक्ति छम्ह खःला धैगु खँय् अप्पो शंका बाकि मदु ।

छु कारणं बंगालया पण्डित हिमालय जुजुं झण्डै सिंगापुर तक यात्रा यायेमाल ज्वी ? १३ शताब्दिइ इतिहासय् आपालं उथलपुथल जूगु काल खः । दक्षिणपूर्वय् मुस्मातयेगु आक्रमण व ज्यादति, अनं हानं पूर्व व मध्य एसिया तक मंगोल साम्राज्यया विस्तार - थ्व निगू हुनिंयाना थ्व लागाया जनसंख्या आपालं

उखेथुखे जूगु जुल । हानं सेनवंशपिनिगु पतन धुंका समुद्री मार्ग सुचारु जूगु व मनूत शान्ति व सुरक्षा दूगु थासय् प्रवासित जूगु खँ अनुमान यायेफु । सिंगसारी व आदित्यवर्मनयागु अभिलेखया उल्लेख कथं रिआउ टापूस गौतमश्रीया उपस्थिति व जावा-सुमात्रा क्षेत्रय् संस्कृत साहित्य व संस्कृति विकास जूगुया संयोग उल्लेखनीय जू । थुकिइयात गौतश्रीया इतिहास लिसे स्वाका थप अध्ययन यायेमाःगु खनेदु । निष्कर्शय् करिमून वेसरया थ्व अभिलेख समुद्री सिल्करोडया मुख्य दसु कथं न्ह्योने दनाच्वंगु दु । थुकिया संरक्षण व थप अध्ययनया लागि ध्यान वियेमाःगु खनेदु ।

*भाय्‌लमि (अनुवादक) - ज्ञानेन्द्र शाक्य*

**पाद टिप्पणी**

– भाय् ह्यूगु मूल लेख - Sinclair, Iain. 2018. 'New Light on the Karimun Besar Inscription (Prasasti Pasir Panjang) and the Learned Man from Gaur,' NSC Highlights 11: 16–17. [Available online] https://think-asia.org/bitstream/handle/11540/9401/NSC_Highlights_11. pdf

– "थ्व लेखया लेखकपाखें थ्व भाषानुवादया समीक्षा जुइधुंकूगु दु । थ्व भाषानुवादया लागि लेखकपाखें भाय्‌लमि ज्ञानेन्द्र शाक्यजुयात दुनुगलंनिसें सुभाय् देछाःगु दु ।"

– "थ्व लेखया विस्तारित संस्करण २०२१ अप्रील ८ स जूगु Berkeley Buddhist Studies lecture series स 'The last Pāla–Sena pandita, Gautamaśrībhadra, at the ends of the Buddhist earth' या नामं प्रस्तुतीकरण जूगु खः ।

**सन्दर्भ ग्रन्थ सूची**

Brandes, J. L. A. (1887.) 'De missive van den Consul Generaal der Nederlanden te Singapore, dd. 6. Oct. jl., No. 845.' Notulen Deel XIV—1886. Batavia: Albrecht & Co., 148–152.

Bühnemann, Gudrun. (1994.) Sādhanaśataka and Sādhanaśatapañcāśikā. Wien: Arbeitskreis für Tibetische und Buddhistische Studien, Universität Wien.

Caldwell, Ian; Hazlewood, Ann Appleby. (1994.) 'The Holy Footprints of the Venerable Gautama: A New Translation of the Pasir Panjang Inscription.' Bijdragen tot de taal-, land- en volkenkunde 150 (3), 457–480. https://www.jstor.org/stable/27864576

Chatterjee, Bijan Raj. (1933.) India And Java. Vol. II. Calcutta. (2nd Ed.)

Franke, Herbert. (1994.) China under Mongol Rule. Brookfield: Variorum.

Kern, H. (1917.) Verspreide Geschriften. Zevende deel. 's-Gravenhage: Martinus Nijhoff.

Sinclair, Iain. (2018.) 'Gautamaśrī: A Bengali Buddhist Pundit in transit through The Himalayas and the Singapore Strait.' Unpublished draft.

वज्राचार्य, हेराकाजी (२०५६) । गुइतःया बहि विहार संघ-छगू अध्ययन । गुइतः यल, दीपावती पुस्तकालय ।



चित्र नं १: गुइतःबहिया बुद्ध प्रतिमा व क्वफःया शिलाभिलेख



चित्र नं. २: गौतमश्री उल्लेख जूगु अभिलेख दूगु प्रथम श्री महाविहार, तधँ बहि (ने.सं. ३९९ या अभिलेखानुसार गुसतल महाविहार)



चित्र नं. ३ : गुइतः बहिया लिच्छिवि चैत्यया क्वफले च्वंगु ने.सं. १४४ या अभिलेख



चित्र नं ४ : रञ्जना लिपिं च्वया तःगु करिमून अभिलेख प्रसस्ती पसिर पञ्जाङ । थुकि दूगु स्वधो आखःया पाठ थुकथं दु । १. महायानिक २. गौलपण्डितश्री ३.गौतमश्रीपादा (:)। अर्थात् "महायानिक गौर देय्याम्ह पण्डित गौतमश्रीया पालि"



# गुइत:को "त:ग्व: चिभा:"

✍ सम्पादक

ललितपुरको पूर्वतिर छेउमा रहेको ऐतिहासिक महत्त्वले सम्पन्न प्राचीन स्थल गुइत:टोल हो । यस टोलमा प्रथम श्री महाविहार, वसुच्चशील महाविहार व गुस्तल महाविहार नामक तीन बहिलहरू एकै स्थानमा आ-आफ्नै संघ व्यवस्थामा रहेका छन् । यस बाहेक यस टोलको निम्नानुसार अनेक विशेषताहरू छन् ।

१. **धँल्या: हिटी र गुइत: अजी** – गुँला पर्वको अवसरमा बहि:द्य: ब्वयेगु परम्परानुसार यस टोलमा धँल्या: हिटी र गुइत: अजीको प्रतिमा प्रदर्शन गरिन्छ । यस पर्वमा ठूलो संख्यामा श्रद्धालुहरू भाद्र कृष्ण प्रतिपदाका दिन यहाँ आई दर्शन र पूजन गर्न आउँछन् ।

२. **तुलाँ पौ** – दीपंकर तथागत प्रमुख भिक्षुसंघलाई निमन्त्रणा गरी राजा सर्वानन्दले दीपावती नगरमा सम्यक् दान पञ्जदानको उत्सव आयोजना गरेको कथा रहेको सर्वानन्द नृप जातकलाई चित्रांकित गरी ३६ फिट लामो तुलाँ पौ बहीद्यो: ब्वयेगु क्रममा प्रदर्शन गर्ने गरिन्छ ।

३. **पञ्जदान पर्व** – पञ्जाष्टमीको दिनमा पञ्जदानको परम्परा शुभारम्भ भएको स्थानका रूपमा प्रसिद्ध

४. **नौ अंक संगको संयोग** – यस टोल नौ तले मन्दिर, नौ ओटा हिटी, नौ ओटा इनार आदि नौ अंकसँग मिलाई धर्मकीर्तिहरू स्थापना गरिएकोले यस ठाउँको नाम 'गुसतल' नामाकरण हुन गएको

५. **बुद्ध मूर्ति** – नेपालका बहाल र बहिलमा स्थापना गरिएका क्वापा:द्य, गन्धुरीदेवताको मूर्तिहरू मध्ये सबैभन्दा अग्लो बुद्ध मूर्ति स्थापना गरिएको

६. **सर्वप्राचीन अभिलेख** – ललितपुरका बहाल बहिलमा भएका अभिलेखहरू मध्ये सबैभन्दा अघिको शिलाभिलेख[१] भएको बहिल प्रथम श्री महाविहार भएकोले यस बहिल ऐतिहासिक प्रमाणका आधारमा हालका लागि सर्वप्राचीन बहिल भएको । (राजवंशी, २०७२, पेज - ७४)

गुइत: टोलमा स्थापित विभिन्न धर्मकीर्तिहरू मध्ये वसुच्चशील महाविहारको ठीक अगाडि रहेको 'त:ग्व: चिभा:' नामले चिरपरिचित (धान्याराश्याकृति

चैत्य - हिटी फुसेच्वँगु चिभाः भनी पनि चिनिने) र गुस्तल महाविहारको ठीक अगाडिको अर्को ठूलो चिभा (वेदिकोपरिस्वयम्भू चैत्य - गःसि चिभाःको नामले चिनिने) पनि हो । (शाक्य, २०५० पेज-४८)। यी मध्ये हितिको छेउमा रहेको चैत्यको ऐतिहासिक सांस्कृतिक महत्त्व र चैत्य वास्तुकलाको परिचय यहाँ प्रस्तुत गरिएको छ ।

**स्तुप - चैत्य - चिभाः**

बौद्ध वास्तुकला भन्नाले प्रमुखतः विहार र स्तुप वा चैत्यलाई बुझाइन्छ । विहार बुद्ध सहित भिक्षुसंघ को आवासका रूपमा बनाइएको संरचना हो र स्तुप वा चैत्य बुद्ध र बुद्धज्ञानको प्रतिक स्वरूप पूजा, ध्यान र प्रशिक्षणको लागि निर्माण गरिने वास्तुकला हो जुन विहारमा जस्तै संरचनाको भित्र गई निवास गर्ने प्रयोजनमा बनाइएको हुँदैन । स्तुप र चैत्य निर्माणको परम्परा बुद्ध भन्दा धरै अघि देखि नै रहेको छ । यस्तै बुद्धकालमा बुद्धको अस्थिधातु, केशधातु, दन्तधातु गर्भमा राखी चैत्य बनाएको प्रसङ्ग यहाँ उल्लेखनीय छ । बौद्ध वाङ्मयमा चैत्य चार प्रकारका छन् ।

१. **शारीरिक चैत्य** - भगवान् बुद्धको शरीरको अस्थि अथवा अन्य धातु गर्भमा राखी बनाइएका
२. **परिभोग चैत्य** - भगवान् बुद्धले प्रयोग गर्नु भएको वस्तु गर्भमा राखी बनाइएका
३. **उद्देश्य चैत्य** - लोकमा पुण्य अभिवृद्धि गर्ने पवित्र उद्देश्यले श्रद्धालुद्वारा बनाइने




*चित्र नं. १ - गुइतः त्वाःया नक्सा*

४. **धर्म चैत्य** – धर्म संग्रह गरिएको तथा संगायन भएको स्थानमा ती महान् घटनाको संस्मरणमा बनाइने वा अमूल्य धर्मस्कन्ध गर्भमा राखी बनाइने

नेपालमा हाल स्तुप, चैत्य वा चिभाः पर्यायवाची रूपमा प्रयोग गरिन्छ । यद्यपि यी शब्दहरू बीच केही भेद छ । यसलाई यहाँ केही चर्चा गरिनेछ ।

**स्तुप** –'स्तुप' शब्दको अर्थ इतिहास कालक्रमानुसार विभिन्न किसिमका छन् । ती मध्ये अस्थिधातु राखी माटो र ढुंगा थुपारेर बनाउने ढिस्कोलाई बुद्धकालमा 'थुवे' भनिन्थ्यो । त्यस्तै प्रकारको ढिस्कोलाई नेपालमा 'थुवे' शब्दको अपभ्रँश भई 'थुर' भन्ने गरिएको पाइन्छ । यो 'थुवे'लाई संस्कृतमा 'स्तुप' भनिने हो । नेपालमा पाटनको चार ओटा थुर बाहेक अरु सबै यस प्रकारको वास्तुकलालाई चैत्य नै भनी सम्बोधन गर्दै आएको छ । स्वयम्भू महाचैत्यलाई स्तुप भनी सम्बोधन गरिएको कहीं कतै भेट्टिएको छैन । अंग्रेज लेखकहरूले मात्र 'स्तुपा' भन्ने शब्द प्रयोगमा ल्याएको हो । त्यसैले नेपालको सन्दर्भमा पाटनका चार थुर मात्र स्तुप हुन् । बाँकी सबै चैत्य नै हुन् ।

**चैत्य** – पं. हेमराज (२०५०) ले चैत्यको अर्थलाई विवेचना गर्दै तीन किसिमले अर्थ हुने कुरा प्रस्तुत गरेका छन् ।

क. '**चित्त चैतन्य चैत्य**' – स्वयम्भू पुराणमा रहेको शाक्यमुनि बुद्धले श्री स्वयम्भू महाचैत्य दर्शन गर्दा गर्नु भएको स्तुति वाक्यमा चैत्यलाई 'नैराकारं निरञ्जनं गगनवदनिशं चित्त चैतन्य चैत्यं' अर्थात् 'आकाश समान भइरहेको केही कुनै आलम्बसँग लिप्त नभएको प्रभाश्वर समान सर्वदा प्रकाशमान भइरहेको सदाकालमा जागृत चैतन्य स्वरूपको चित्त नै चैत्य हो' भनी परिभाषित गरिएको छ ।

ख. '**चिताको वस्तु**' – बुद्ध बोधिसत्त्वहरूको शरीरलाई विधिवत् आदहनोत्सव अग्नि संस्कार गरेपश्चात् बाँकी हुने अस्थिधातु अर्थात् चित्तिवस्तुलाई पनि 'चैत्य' भनिन्छ । यस्ता चित्तिवस्तु संग्रह गरी अनुयायीहरूले भविष्य पर्यन्त वहाँको गुण सम्झी गौरव राख्नु, धर्म संवेग उत्पन्न गर्नका लागि स्थापना गर्ने स्मारकलाई पनि 'चैत्य' भनिन्छ ।

ग. **बुद्धको पुण्यकीर्तिको संग्रह** – भगवान् बुद्धका जति पनि पुण्यकीर्तिहरू छन्, उक्त सम्पूर्ण कुशलमूल संग्रहलाई पनि चैत्य भनिन्छ ।

समग्रमा हेर्दा बुद्ध ज्ञानको प्रतिकका रूपमा धर्म संवेग उत्पन्न गर्नका लागि निमित्तको रूपमा चार संवेजनीय स्थल (बुद्ध जन्मस्थल, ज्ञान लाभ गरेको स्थल, धर्मचक्र प्रवर्तन स्थल र महापरिनिर्वाण स्थल) लगायत मानिसहरूको बस्ती नगरको ठाउँठाउँमा बनाइएका धर्मको चिन्हलाई नै चैत्य भनी बुझ्नु पर्दछ ।

नेपालको सन्दर्भमा नेपालमण्डलको बौद्ध संस्कृतिको सम्पूर्ण आधार स्वयम्भू धर्मधातुवागीश्वरको ज्ञान भएको हुनाले नेपालको सबै चैत्य आदिबुद्ध धर्मकाय स्वरूपको स्वयम्भू महाचैत्यको नै प्रतिलिपिका रूपमा बनाइएको हुन्छ । त्यसैकारण नेपाल मण्डलमा बनाइने सबै चैत्यमा निम्नानुसार लक्षण प्रमाण अनिवार्य रुपमा हुन्छ ।

१. **नागह्रदको प्रतीक** – नागह्रदको प्रतीक स्वरूप नागोबुट्टाले घेरेको हुन्छ । अन्यथा पानीको प्रतिनिधित्व हुने अन्य वस्तु आकृति बनाइएको हुन्छ ।

२. **कमलको फूल** – यसको माथी सहस्रदल कमल स्वरूप पद्मावली हुन्छ ।

३. **गुम्बज** – कमलको मध्यबाट उत्पन्न भएको ज्योतिरूपलाई छोपी बनाइएको चैत्यको गुम्बज ।

४. **आँखा र उर्णा लेखिएको हर्मिका**

५. **नेपालको मौलिक शैलीको गजूर** – त्रयोदशभूमि रूपी तेह्र तह, यष्ठिमूल र ज्योतिरूप स्वरूप उष्णीष चुडामणि सहितको गजूर

**चिभाः** – विभिन्न ठाउँठाउँमा प्रतिष्ठापित भइरहेको चैत्य चिभा:को स्थापना सम्बन्धी अभिलेखमा उल्लेख भइरहेको शब्दहरू र त्यसको विकासक्रमलाई विचार गरी हेर्दा 'चिभा:' शब्दको ब्युत्पत्ति सम्बन्धी दुई किसिमको धारणा बुझ्नु पर्ने देखिन्छ ।

**क. 'चैत्य विहार' –**

'चिभा:' शब्द 'चैत्य विहार' भन्ने संस्कृत शब्दबाट आएको हो । विभिन्न प्राचीन मध्यकालीन शिलालेखमा 'चैत्य विहार', 'चैत्य वाहार'[२], 'चितु वहार', 'चैते वाहार' भन्ने शब्दहरू प्रयोगमा आएको पाइन्छ । यसरी 'चैत्य' र 'विहार' दुई शब्दहरू मिलाएर प्रयोग गर्नुमा दुई कारण हुन सक्ने अनुमान गरिएको छ ।

**क १. चैत्य विहारको अभिन्न अङ्ग** – प्राचीनकालमा चैत्य विहारको अभिन्न अङ्गको रूपमा बनाइने भएकोले चैत्य विहार भन्ने शब्द सँगसँगै प्रयोग भएको देखिन्छ।

**क २. विहारको आकृतिमा बनाइएका चारकुने संरचनाको माथि बिसाइएको चैत्याकार** – शैली अनुसार विचार गर्दा स्वयम्भू, खास्ति चैत्य (बौद्ध) जस्ता चैत्यको गर्भगृह अर्थात् गुम्बज मात्र ठूलो भाग हुने गरी बनाइएकालाई धेरैजसो चैत्य वा महाचैत्य मात्र भनिन्छ भने दुई तला, तीन तलाको घर जस्तो चतुष्कोणाकार आधार राखी त्यसमाथि मात्र गुम्बज राखिने शैलीलाई 'चिभा:' भनिएको देखिन्छ । गुम्बजाकार स्तुप बिसाइएको आधार एक तले, बहुतले संरचना विहारको आकृति हो । यसमा ढोका, झ्याल, छाना, दलिन आदिको आकृतिहरू बनाइएको हुन्छ । यसरी विहारको आकृतिको माथि स्वयम्भू स्तुपाकार गुम्बज बिसाई चैत्य र विहारको संयुक्त स्वरूप भएकोले यस शैलीलाई चैत्य विहार भनिएको हो । यही शब्द अपभ्रंस भएर 'चि बाहा:' भयो । फेरी 'चि बाहा' शब्द पछि 'चिभा:' हुन गयो ।




*चित्र नं. ३ गुस्तल महाविहार भित्र रहेको शिखरकूट चैत्य (चित्र साभार - Gutschow 1997)*

**ख. 'चैत्य भट्टारक' –**

चैत्यको प्रतिष्ठा सम्बन्धी विभिन्न ठाउँमा रहेको शिलाभिलेखमा 'चैत्य भट्टारक'[३], 'चैत्र भट्टारक'[४], 'चैते भदाद'[५], 'चैत्र भण्ड'[६] आदि शब्द प्रयोग भइरहेको पाइन्छ । 'चैत्य भट्टारक' भन्ने शब्द नै अपभ्रंश भई पछि 'चिभा:' भएको हो भन्ने कुरा विज्ञहरूको भनाई छ ।

गुइत:को हितिको छेउमा रहेको त:ग्व: चिभा:लाई पनि चिभा: नै भनिन्छ । यद्यपि यो स्वयम्भू, खास्ति चैत्यको शैलीको हो । त्यसैले यो चिभा:को सन्दर्भमा क.२ को कारण मिल्दैन । क.१ वा ख. को कारण मात्र सम्भव छ ।

**भौतिक स्वरूपको वर्णन**

वसुच्चशील महाविहार चिधँबहि:को पूर्वतिर

बहिलबाट बाहिर गन्धुरीदेवताको ठीक अगाडि पर्ने गरी बनाइएको ठूलो चिबाहा: वास्तुकला र प्राचीन मूर्तिकलाको एक महत्वपूर्ण उदाहरणको रूपमा उभिएको छ । यस चैत्यको दक्षिणतिर झण्डै जोडिएर एक गा:हिति (गैरिधारा) छ जसले गर्दा यस चिभा:लाई स्थानीयले 'हितिफुसे च्वँगु चिभा:' भनी चिन्ने गरेको छ । यस्तै गुइत: पोखरी, ठूलो गणेश, सानो गणेश, लाय् ब्व: आदि यस चिभा:को वरिपरि रहेको महत्वपूर्ण विषयवस्तुहरू हुन् । यस चैत्यको शैली अनुसार यसलाई धान्याराश्याकृति चैत्य[७] भनी उल्लेख गरिएको छ । यो चिभा: जम्मा गरी नौ चैत्यले युक्त छ । थुर जस्तै ठूलो गुम्बज आकार (अण्ड) भएको मूल चैत्य - १ ओटा, यस ठूलो चैत्यको अण्डभागसँग टाँसेर चार दिशामा बनाइएको पञ्चबुद्धको खोपी मन्दिरहरूको गजूरको रूपमा स्थापित लिच्छिवि चैत्यहरू (यस शैलीको चैत्यलाई अशोक चैत्य भनी पनि चिनिन्छ ।) - ४ ओटा, र चैत्यसँगै अलिकति पर चारकुनामा बनाइएको चार ओटा साना मन्दिरहरूको शीर्ष स्थानमा राखिएको लिच्छिवि चैत्यहरू[८] - ४ ओटा गरी जम्मा नौ ओटा चैत्यको कलापूर्ण संयोजन यसमा भइरहेको छ । यी सम्पूर्ण संरचनाहरू १ फिट अग्लो आधार (नेपाल भाषामा फ: भनिन्छ) मा बिसाइएको छ। चैत्यको यो फ: चैत्य परिक्रमा गर्नका लागि हुने गरी बनाइएको छ । चैत्य परिक्रमाको क्रममा माने घुमाउनका लागि चैत्यको वरिपरि ॐ मणिपद्मे हुँ को षडक्षरी मन्त्र लिखित माने पनि राखिएको छ । यस चैत्यलाई तल देखि माथिसम्म हेर्ने हो भने विभिन्न तहहरू गरी यो चैत्य निर्माण गरिएको देखिन्छ । यी तहहरूको बारे क्रमश: वर्णन यस प्रकार छ।

**१. चिभाः फः -**

मूल चिभा:को सबै भन्दा मुनिको तह २ फित उचाइको वृताकार फ: (आधार) हो । यो वृताकार फ:लाई संस्कृत भाषमा 'वेदिका' भनिन्छ । वेदिका पनि नागो बुट्टाको माथि बिसाएको जस्तै गरी देखिने गरी बनाइएको छ । नागो बुट्टा नाग अर्थात् पानीको प्रतीक हो ।

**२. गुम्बज (अण्ड) -**

वेदिकाको ठीक माथि पद्मावली स्वरूपले 'फ्यो' र त्यसको माथि अर्को 'ना:गो' बनाई त्यसको माथि चिभा:को अर्धगोलाकार गुम्बज अर्थात् 'अण्ड' (संस्कृत भाषामा) बनाइएको छ । यस गुम्बजको करिब १३ फिटको उचाइ छ । यो गुम्बज बुद्धकाल र बुद्ध भन्दा अघि देखि प्रचलनमा भएको अस्थि वा अन्य वस्तु गर्भमा राखी ढुंगा वा माटोको ढिस्को बनाइने 'थुवे' को स्वरूप हो । 'अण्ड' को अर्थ 'बीज' हो । यो अण्डा भित्र सम्पूर्ण संसार समाविष्ट छ त्यसैले यो अण्डाकार गुम्बज संसारको प्रतीक हो । यो गुम्बजलाई बौद्ध साहित्यमा 'गर्भ', 'हिरण्य गर्भ', 'गर्भगृह' आदि नामले पनि चिनिन्छ । यसैको कारण चैत्यलाई 'धातु गर्भ'[९] पनि भनिन्छ । यस अनुसार चिभा:को यो गुम्बज संसार र निर्वाणको संयुक्त रूपको प्रतीक हो । त्यसैले गुम्बज या गोलाकार पिण्ड संसार हो भने त्यसको केन्द्रविन्दु तथागतगर्भको प्रतीक हो । यही तथागत गर्भलाई विभिन्न सन्दर्भमा 'धर्मकाय', 'बोधिचित्त', 'आलय विज्ञान', 'बुद्ध गर्भ', 'सुगतगर्भ' भनी भनिएको पाइन्छ । त्यसैले यो गर्भगृहलाई 'चैत्य' गर्भ पनि भनिन्छ । यो गुम्बज बिसाइएको पद्मावली आकारको 'फ्यो' कमलको पातको प्रतीक हो । कमलको पातको अर्थ - अलिप्तता वा पवित्रता हो । कमलको माथि बिसाउनुको अर्थ सुविशुद्ध अर्थात् सम्पूर्ण क्लेशबाट अलग्ग भई अमूल्य महारत्न समान भएको सारतत्त्व हो (शाक्य २०५०, पेज २८) । माध्यमिक दृष्टिबाट हेर्दा शून्यता ज्ञान अनुसार संसार र निर्वाणमा केही भेद देखिँदैन । यस्तै नै सुविशुद्ध धर्मधातु ज्ञानकाय धर्मकाय स्वरूपको चैतन्यको प्रतीक स्वरूप चैत्यको गुम्बज बनाइएको छ । (Snodgrass, 1992)

३. 'चक्: ' वा 'हर्मिका' –

गुम्बजको माथि दुई आँखा र उर्णा लेखिएको वर्गाकार चक्: (संस्कृत भाषमा 'हर्मिका' भनिन्छ, कतै यसलाई 'गला' पनि भनिएको छ ।) बनाइएको छ । प्राचीन अशोककालीन स्तुपमा अण्डको माथि य:सि ठड्याइएको हुन्छ र त्यसलाई चारैतिरबाट छेकवार (Fence) लगाइएको जस्तो संरचना बनाइएको हुन्छ । यही संरचना पछि विकासक्रमसँगै यस प्रकारको वर्गाकार संरचनाको रूपमा बनाउन थालिएको हो । नेपालमण्डलमा भएका अरू चैत्यमा पनि हर्मिकाको शैली सादा रूपमा मात्र बनाई त्यसमा आँखा र उर्णा लेखिएको हुन्छ । बुद्धकालको शब्द हम्मीय[१०], हर्म्य अर्थात् घेरिएको स्थान भन्ने शब्दले नै संस्कृत भाषामा हर्मिका हुन गएको हो । चैत्यको विकासक्रममा यसलाई विभिन्न किसिमले प्रतीक बनाउन थाल्यो ।

यी मध्ये हर्मिका बोधिमण्डप अर्थात् बोधिज्ञान लाभ गर्नु भएको आसनको पनि प्रतीक हो । जुन स्थानबाट ज्ञानको ज्योति सबै दिशामा प्रसारित भयो । यही कारणले हर्मिकाको माथि बुद्धभूमि र बोधिसत्त्व भूमि रूपी तेह्र तह संरचना बनाइएको हुन्छ । यस्तै चार दिशामा आँखा लेख्ने प्रचलन नेपालको मौलिक परम्पराको रूपमा नेपालमा चल्यो जुन लक्षण अहिले नेपाली चैत्यको पहिचान हुन पुगेको छ । हर्मिकामा लेखिएको आँखा बुद्धको आँखा हो जसलाई 'वज्रदृष्टि' भनिन्छ (Gutschow, 1997)। यी चार दिशामा लेखिने आँखा चैत्यको बीचमा रहने वैरोचन बुद्धको संस्मरणका रूपमा बुद्धको ज्ञानचक्षुले सर्वत्र सुदृष्टिले हेरिरहेको भन्ने अर्थ हो ।

दुई आँखाको बीचमा दायाँबाट घुमाइएको एक ओटा रौं अर्थात् 'उर्णा' लेखिएको छ । भगवान् बुद्धको बत्तीस महापुरूषलक्षण मध्ये निधारमा हुने 'उर्णा' पनि एक हो । ललितविस्तर सूत्रमा उल्लेख भए अनुसार यो उर्णाबाट रश्मी निस्केर मारचक्रलाई नष्टगरेको प्रसङ्गलाई देखाउन यस उर्णा लेखिएको हो । यसलाई अर्को शब्दमा 'तिलकरश्मी' र 'गभस्तिमाला' पनि भनिन्छ ।

४. त्रयोदश भूमिको तह[११] –

हर्मिकाको माथि पनि फेरी ना:गो, फ्यो आदि राखी त्यसको माथि त्रयोदश भूमिको प्रतीक स्वरूप वर्गाकार तेह्र तह गरी संरचना बनाइएको छ । हरेक वर्गाकार तह तलको तह भन्दा माथिको तह अलिकति सानो आकार हुने गरी बनाइएकोले यो भाग खुड्कला जस्तै आकार भई गजूर जस्तै चुलिदै गएको छ । गुइत:को दुवै चैत्यको त्रयोदश भूमि खास्ति चैत्यको शैलीमा वर्गाकार गरी बनाइएको छ । खास्ति चैत्यमा जस्तै यसमा पनि 'हल:पौ' राखिएको छैन ।[१२] नेपालमण्डलमा प्रतिष्ठापित चैत्यमा विभिन्न प्रकारले यी भूमिहरू राखी बनाउने परम्परा छ । पाँच, सात, एघार, तेह्र तह गरी बनाइएका चैत्यहरू मध्ये गुइत:को यो चैत्य तेह्र तह गरी बनाइएको हुनाले यसलाई वर्गीकरण अनुसार 'वज्रयानभूमि चैत्य'[१३] भनिन्छ (शाक्य, २०५० - पेज १४, Gutschow 1997 pg 23) । योगको अभ्यासमा क्रमश: पार हुँदै अघि बढ्नुको प्रतीकका रूपमा यसलाई 'धर्मपारङ्गतभूमि' पनि भनिन्छ । यसमा नियमानुसार मार्गफलमा क्रमश: प्रतिष्ठित हुँदै बुद्धत्व प्राप्त गर्ने महाक्रम देखाइएको हो जसलाई 'बुद्धयान' भनिन्छ । यी मध्ये तल देखि पाँच तह सम्म श्रावक भूमि हो, त्यस भन्दा माथि नवौं तहसम्म प्रत्येकभूमि हो, त्यहाँबाट माथि बाह्रौं भूमि सम्म महायानभूमि हो भने त्यस भन्दा माथिको सर्वोच्च तेह्रौं भूमि वज्रयानभूमि हो ।

५. अम्व:साहा: –

त्रयोदश भूमि तहको माथि एउटा पादशीला राखी त्यस माथि 'अम्वसाहा:' राखिएको छ । यसलाई 'क्यरावाय्मो' पनि भनिन्छ । यो बाय्म्व: अमला फलको माला उनेर बनाएको जस्तो आकृतिमा

बनाइने भएकोले यसलाई 'अम्व:साहा:' वा 'अम्व:' वा संस्कृतमा 'आमलक' भनी भनिन्छ । यो आकृति हिन्दु वा बौद्ध मन्दिर दुवैमा गजूरको मुनितिर राखिएको हुन्छ । परम्परागत बुट्टे थामहरूमा पनि यस प्रकारको अम्व:साहा:को आकृति बनाएको देख्न सकिन्छ । प्राचीनकालमा अशोक स्तम्भको टुप्पोमा (Capital) यस यस्तो आमलक बनाउने चलन थियो । नेपालमा पनि शुरूशुरूका लिच्छिवि चैत्य (अशोक चैत्य)हरूमा गजूरमा थिएन । यस्तो अम्व:साहा राख्ने चलन बरू चैत्यको तलतिरको भागमा कुँडिएको थामको आकृतिमा ती थामको शीर्षस्थानमा अम्व:साहा प्रयोग भएको देखिन्छ (उदाहरण: आल्को हितिको अशोक चैत्य, Gutschow 1997, pg144)। विकासक्रममा पछि लिच्छिवि चैत्यमा र त्यसपछिका चैत्यहरूमा यो अम्वसाहा: चिभा: वास्तुशैलीको एक अनिवार्य लक्षणकै रुपमा त्रयोदश भूमि तहको ठीक माथि राख्ने गरियो । अम्व:साहाको यो आकृति बुद्धत्वको तेजका रूपमा सूर्यको प्रतीक हो । नेपालको चैत्य सम्बन्धी हस्तलिखित ग्रन्थमा यस अम्व:साहा: वा केरावायम्व: लाई 'आष्फानकविशुद्धी' भनी संज्ञा दिइएको छ (Gutschow, 1997 pg 23)। भगवान् बुद्धले छ वर्षसम्म गर्नु भएको दुष्करचर्याको क्रममा आष्फानक योग गर्नु भएको थियो । त्यसैले दुष्करचर्याबाट पार भएर प्राप्त भएको बोधिज्ञानको प्रतीकको रूपमा यसलाई 'आष्फानकविशुद्धी' भनिएको हो ।

**६. य:सि (यष्ठिका) –**

अम्वसाहा:को ठीक माथि काठको खम्बा जस्तो आकृति उठेको देख्न सकिन्छ । यसलाई 'य:सिं', 'यष्ठि', 'यष्ठिका', 'यूप', 'यष्ठिमूल' आदि विभिन्न शब्दले चिनिन्छ । यो य:सिं चैत्यको जग देखि नै उठेको हुन्छ । स्वयम्भू, खास्ति, गुइत:, पिम्बहा, दौबहा, यट् खाबहा, सिंहबहा, चिलंच्वबहा (किपू) का चिभा:हरूमा अझै पनि काठको नै य:सि राखिएको छ । चैत्यको य:सिको प्रतीकात्मक अर्थ विभिन्न किसिमले गरिएको छ ।

**क. बोधि वृक्ष** – साँची स्तुप जस्तो अशोककालीन स्तुपमा तीन तह गरी गोलाकार चक्रावली राखी स्तुपको अण्डको माथि रूख उम्रेको रूपमा बनाइएको छ । यस्तै भारतको अमरावती स्तुपमा कोरिएको बुट्टाहरूमा झन् स्पष्ट हुने गरी रूखको नै आकृति कुँडिएको छ । यसलाई बोधिमण्डप (हर्मिका) मा उम्रेको बोधिवृक्षको रूपमा लिइएको छ ।

**ख. सुविशुद्धधर्मधातु ज्ञानको प्रतिमूर्ति वैरोचन** – पञ्चबुद्धात्मक चैत्यको अवधारणा अनुसार चारजना बुद्ध चार दिशामा राखिन्छ र वैरोचन तथागत मध्यस्थानमा राखिन्छ । यो य:सि सुविशुद्धधर्मधातु ज्ञानको प्रतिमूर्ति वैरोचन तथागतको प्रतीक हो ।

**७. उष्णीषचुडामणि –**

य:सिको टुप्पोमा अर्धगोलाकार गरी सर्वबुद्धमहामुकुट उष्णीषचुडामणिको रूपमा डल्लो परेको एउटा आकृति राखिन्छ । यो मणि (हिरा) हो र यो बुद्धरत्नको प्रतिक हो । वर्माको सर्वप्रसिद्ध स्वेदगों प्यागोडाको शीर्ष स्थानमा ७६ क्यारेटको असली हिरा नै राखिएको छ । यो मणिलाई उच्चकोटिको दर्शनज्ञानको अनुत्तर बोधिरत्न भनी संज्ञा दिइएको छ । सम्पूर्ण चैत्यको संक्षिप्त रूप यस धर्मकाय स्वरूप रत्न हुने भएकोले चैत्यलाई 'चैत्यरत्न' भनी पनि सम्बोधन गर्ने गरिन्छ । चैत्य सम्बन्धी हस्तलिखित थ्यासफूमा त्रयोदश भूमि तह देखि उष्णीषचुडामणि सम्मको समग्र विषयवस्तुयलाई 'शून्यताविशुद्धि उष्णीषचक्र अनुत्तरसम्येकसम्बोधि भूमि' भन्ने नाम दिइएको छ । यस अर्थमा चैत्यको त्रयोदशभूमि देखि मणि सम्मको भागबाट पृथग्जन सत्त्वहरूले बोधिसत्त्व संवर धारण गरेपश्चात् देखि सम्येकसम्बुद्धत्व प्राप्त हुन्जेल सम्मको मार्ग महाक्रम दर्साएको हो ।

## ८. छत्र –

चिभा:को य:सि र उष्णीषचुडामणिलाई छोप्ने गरी सुवर्णछत्रले ओढाएको हुन्छ । सम्पूर्ण सम्येकसम्बुद्धत्व प्राप्त गर्ने मार्गक्रम ज्ञानलाई उच्चत्तम आदरसत्कार गर्दै मणिरत्न जडेको भावमा बुट्टाहरू कुँडेको सुवर्ण छत्र ओढाई श्रीशोभायमान हुने गरी राखिएको हुन्छ । सद्धर्मपुण्डरिक, ललितविस्तर, महाकर्मविभङ्ग, महावस्तु आदि ग्रन्थमा चैत्यमा छत्र चढाउने पुण्यबाट चक्रवर्ती हुने, सुगति प्राप्त हुने, निर्वाणसम्म लाभ हुने कुरा उल्लेख भइरहे अनुसार चैत्यमा छत्रले ओढाउने परम्परा चलिआएको हो । छत्र चैत्यको अभिन्न अङ्ग चाहिं होइन । दाताद्वारा चढाएको ठाउँमा मात्र यस प्रकारको छत्र हुने हो । गुइत:को नै ग:सि चिभा:मा यस्तो छत्र छैन ।

छत्रको माथि चुच्चो गजूर राखिएको छ । छत्रको माथि पनि फेरि अर्को अम्वसाहा: बनाई त्यसको माथि कलश र त्यसको माथि चुच्चो परेको मणिरत्न राखिएको छ । गजूरको यस भाग हिन्दु वा बौद्ध दुवै मन्दिरहरूमा हुने खालको आकृतिमा छ । यसमा भएको पूर्णकलशको अर्थ ज्ञानको पूर्णता हो । त्यसको माथि राखिएको मणि शून्यता ज्ञानको महारत्न हो ।

### चिभा:मा प्रतिस्थापित मूर्ति र अन्य कलाकृतिको वर्णन

यस चैत्यमा पनि अन्य चिभा:हरूमा जस्तै नै पञ्चबुद्ध मध्ये चार बुद्धहरूको मूर्ति चार कुनामा स्थापना गरिएको छ । पूर्वमा अभिताभ, दक्षिणमा रत्नसम्भव, पश्चिममा अक्षोभ्य र उत्तरमा अमोघसिद्धि स्थापना गरिएको छ । अद्भूत रूपमा यस चैत्यमा अक्षोभ्य बुद्ध र अभिताभ बुद्धको दिशा एक अर्कामा साटिएको छ । यो यस चैत्यको एक अनुपम विशेषता हो । यस प्रकारले दिशा साटिएको चैत्य नेपालमा नै अर्को एउटा पाटनको त:बहालमा छ । यसरी अक्षोभ्य बुद्ध पश्चिम दिशामा र अभिताभ बुद्ध पूर्व दिशामा राख्नुको कारणको विषयमा विभिन्न विद्वान्हरूको फरक फरक भनाइहरू छन् ।[१४] अर्थ पूर्ण रूपले यसरी दिशा साटेका हुन् वा जीर्णोद्धारको क्रममा अन्जानवस यसो हुन गएको हो वा अन्य कारणले हो – यो विषयमा स्पष्ट कारण पत्ता लगाउनका लागि थप अन्वेषण गर्न बाँकि नै छ । पूर्व फर्काउनु पर्ने अक्षोभ्य तथागत पश्चिम फर्काउनुको कारण वसुच्चशील महाविहारको मूल गन्धुरीदेवता अक्षोभ्यको ठीक आमनेसामने पार्नका लागि गरेको हुन् कि भन्ने अनुमान गर्न सकिन्छ । अक्षोभ्य स्थापना गरिएको यो पश्चिम तिरको सानो







*नक्सा ग्वाहालि : पद्म सुन्दर महर्जन*

मन्दिरको प्रमुखत्व दर्साउनका लागि यो मन्दिरको द्वारमाथि पञ्चबुद्ध अंकित शिलाको तोरण राखिएको छ जुन अरु तीन दिशाका बुद्धहरूको मन्दिरमा छैन । यस बाहेक चैत्यको चार कुनामा फेरी अर्को चार ओटा मन्दिर बनाई विभिन्न बुद्ध बोधिसत्त्वहरू स्थापना गरिएको छ । इसान कोण (उत्तर - पूर्व)मा पद्मपाणी लोकेश्वर, आग्नेय कोण (दक्षिण-पूर्व)मा राखिएको मूर्ति खण्डित भएकोले त्यसको प्रतिमा लक्षण स्पष्ट छैन, नैऋत्य कोण (दक्षिण-पश्चिम) मा धर्मचक्र मुद्रा बुद्ध (६ औं शताब्दि) र वायव्य कोण (उत्तर - पश्चिम) मा पद्मपाणी लोकेश्वर स्थापना गरिएको छ।

**गुइतःको बहिःविहारसँगको सम्बन्ध**

गुइतःको वसुच्चशील महाविहार र गुस्तल महाविहार दुवै बहीको मूल गन्धकुटिको ठीक आमनेसामने हुने गरी एक एक ओटा ठूलो चैत्यहरू निर्माण गरिएको छ । यहाँको तीन बहिःविहारको संरचना हेर्दा सुरुमा वर्गाकारको एउटै मात्र बहि निर्माण भएको देखिन्छ । कालान्तरमा यो बही दुई भागमा विभाजित भएको र त्यस मध्ये पनि उत्तरी भाग फेरि दुई विहारमा विभक्त भएको कुरा स्पष्ट छ । यसरी विभाजन हुनु अघि यहाँको विहारको स्वरूपको अनुमान प्रमाण अनुसार विचार गर्दा यस विहार विशाल खुला चोक बीचमा रही अग्लो गरी बनाइएको बुद्धको कास्यमूर्ति सहितको अग्लो मन्दिर भएको ने.सं. ३९९ को तधँ बहिको बुद्धको पादपीठ अभिलेख अनुसार गुसतल नामले प्रख्यात विहार रहेको हो । विभाजन पश्चात् पछिल्लो कालमा आधा भागलाई प्रथम श्री महाविहार नामले चिनियो भने बाँकि आधा भागको पश्चिमतिरको भागमा निर्मित विहारलाई गुस्तल महाविहार र पूर्वतिर निर्मित विहारको नाम वसुच्चशील महाविहारको नामले प्रचलित भयो । यस प्रकारले विहारको विभाजन कहिले भयो भन्ने कुराको अनुमान मात्र गर्न सकिन्छ, तथ्य प्रमाण भेट्टाउन सकेको छैन । ने.सं. ३९९ को तधँ बहिःको मूल मन्दिर भित्र भविष्यव्याकरण मुद्राको दीपङ्कर बुद्धको पादपीठको अभिलेखमा हाल प्रचलित नाम 'प्रथम श्री महाविहार' प्रचलनमा नआएको देखिन्छ । यस अभिलेखमा 'तत्र प्राच्यां दिशि गुसतलो नामरम्यो विहार...' भनी उल्लेख गरिएको छ (वज्राचार्य, २०५६ - पेज ६१) । हिटीको छेउको यो चिभाः र गःसि चिभा दुवै पछि निर्माण भएको विहारको आमने सामने हुने गरी निर्माण भएको छ । तसर्थ यी दुवै चैत्यहरू गुस्तल महाविहार र वसुच्चशील महाविहार निमार्ण हुँदा सँगसँगै वा पछि निर्माण भएको कुरा स्पष्ट छ । अभिलेख प्रमाण अनुसार गःसि चिभाःको दक्षिणाभिमुख रत्नसम्भवको मूर्तिको पादपीठमा ने.सं. ३६८ उल्लेख भएको छ।

यस धान्याराश्याकृति चैत्य (हिटी छेउको चैत्य) वसुच्चशील महाविहार र गुस्तल महाविहार दुवै बहिलका संघ सदस्यहरूको देगुद्यः (कुलदेवता)का रूपमा मान्ने भएकाले देउपुजाका दिन सबै संघ सदस्यहरू जम्मा भई कुलपूजादि कर्मकाण्ड चलाइआएको छ । यसबाट पनि यस चिभाःको वसुच्चशील महाविहार र गुस्तल महाविहार सँग प्रत्यक्ष सम्बन्ध भएको कुरा स्पष्ट छ ।

**इतिहास र प्राचीनता**

यस चैत्य कहिले निर्माण भयो भन्ने विषयमा अभिलेख प्रमाणको अभावका कारण तिथि मिति निर्णय गर्न सकिएन । तर पनि यो चैत्यमा स्थापना गरिएको मूर्तिकलाको शैली, ढुंगाको प्रकृति आदि र यही शैलीमा निर्माण भएको गःसि चिभाःमा भएको अभिलेखबाट निम्नानुसार संकेत लिन सकिन्छ ।

१. **ठूलो आकारको चैत्य बनाउने परम्परा -**

नेपालको बौद्ध वास्तुकला इतिहासमा यो शैलीको ठूलो चैत्य निर्माणको परम्परा प्राचीन कालमा धेरै रहेको र मल्लकालमा यस्तो चैत्य बनाउने

परम्परा कम हुँदै गएको देखिन्छ । स्वयम्भू महाचैत्य, खास्ति चैत्य र चाबहीको धन्द्वँ चैत्य लिच्छिविकालमा नै निर्माण भएको कुरा स्पष्ट भएपनि लिच्छिवि अभिलेखमा कहीं पनि यी चैत्यहरूको उल्लेख देखिंदैन । केवल विहारको नाममात्र उल्लेख भइरहेको छ । इतिहासकारहरूले यसको अर्थ यसरी अनुमान गरेको छ । भारतका विहार निर्माण परम्परामा विहारसँग ठूलो चैत्य बनाई चैत्यलाई विहारकै अभिन्न अङ्गको रूपमा लिने गर्दथ्यो । साँची स्तुप, नालन्दा महाविहारको संरचना आदि सबै यसका उदाहरणहरू हामीले हेर्न सक्छौं । तिवारी (२००१ पेज ६५) को भनाई अनुसार लिच्छिविकालमा उल्लेख भइरहेको शिवदेव विहार भनेको नै खास्ति चैत्य नै हो र चाविहार भनेको अरु कुनै नभई धन्द्वँ चैत्य स्थान नै हो । गुइत:को विहारमा भेट्टिएको ई.सं ५४२ को लिच्छिवि अभिलेखले यहाँ विहार निर्माणको गतिविधि लिच्छिविकालमा सुरु भइसकेको कुरा प्रमाणित भए अनुसार यी ठूला चैत्यहरू पनि त्यहीबेला विहार निर्माण परम्परानुसार यसरी नै विहारको अभिन्न अंग गरी लिच्छिविकाल देखि नै भइरहेको हो कि भन्ने अनुमान गर्न सकिन्छ ।

२. **प्रस्तर मूर्तिकला** – वसुच्चशील महाविहारको अगाडि रहेको यो चैत्यमा प्रतिस्थापित पञ्चबुद्ध मूर्ति लिच्छिविकालको नभइकन चैत्यको नैऋत्य कोण (दक्षिण-पश्चिम कुना) मा रहेको मन्दिरमा स्थापना गरिएको मूर्ति छैठौं शताब्दीको लिच्छिविकालीन प्रस्तरकला हो । यस्तै नै एकै शैलीमा बनाइएका गुस्तल महाविहारको अगाडि रहेको 'ग:सि चिभा:' को मूर्तिहरू लिच्छिवि शैलीमा छ । यो बाहेक यस चैत्यसँग सम्बन्धित आठ ओटा चैत्य पनि शैली अनुसार लिच्छिविकालका छन् । गुस्तल महाविहारको अगाडि भएको ग:सि चिभा:मा भएको ने.सं. ३६८ को अभिलेखले यो चैत्य थकुरी वंशकालमा नै निर्माण भइसकेको प्रमाणित गर्छ ।

ऐतिहासिक र साँस्कृतिक महत्त्वले भरिएका यी गुइत:का ठूला चैत्यहरू दर्शन, पूजन र परिक्रमा गरी ज्ञान र पुण्य वृद्धि गर्ने उत्तम पुण्यक्रिया हो । हाम्रा पूर्वाचार्यहरूले हामीलाई छोडेर गएका यस्ता सम्पदाको बारे बुझ्ने, सिक्ने र अनुसन्धान गर्ने र यसको संरक्षण गरी सद्धर्म चीरस्थायी गर्ने प्रयास सबै पक्षहरूबाट हुनु पर्दछ । चिरं तिट्ठन्तु सद्धम्मो ।

## सन्दर्भ ग्रन्थ सूची


राजवंशी शंकरमान, २०२८, कान्तिपुर ओंबहालटोल ओंबहालबारीको शिलालेख, प्राचीन नेपाल, पुरातत्व विभागको मुखपत्र, अंक १६, श्रावण २०२८ (व्याथि १६ १९७१ ), पुरातत्त्व विभाग, काठमाडौं

http://himalaya=socanth=cam=ac=uk/collections/journals/ancientnepal/pdf/ancient_nepal_16_04=pdf

राजवंशी, श्याम सुन्दर, २०७२, पाटन गुइतबहीको अप्रकाशित लिच्छविकालको अभिलेख, अभिलेख वर्ष ३३ पूर्णाङ्क ३३, राष्ट्रिय अभिलेखालय

वज्राचार्य, हेराकाजी, २०५६, गुइत:या बहि:विहार संघ - छगू अध्ययन, दीपावती पुस्तकालय, गुइत:, यल ।

शाक्य हेमराज, २०५०, चैत्य थ:गु आत्मकथा - संक्षिप्त परिचय, बेखाराज वज्राचार्य, वनवाहा, यल ।

Gutschow, Neils. 1997. The Nepalese Caitya - 1500 years of Buddhist Votive Architecture in the Kathmandu Valley. Lumbini International Research Institute.

Regmi, D.R., 1966. Medieval Nepal Part IV, author, Patna

Snodgrass, A. 1992. The symbolism of Stupa, Motilal Banrasidass, Delhi

Tiwari, S.R., 2001, The Ancient Settlements of the Kathmandu Valley. CNAS, TU.

Tucci Giuseppe, 1932. Stupa: Art, Architecture and Symbolism, Aditya Prashan Delhi.


## पाद टिप्पणी

१ मूल मन्दिर पुन:निर्माणको क्रममा मूल गन्धुरी देवताको पादपीठको पछाडिको भागमा भेट्टाएको लिच्छिविकालीन अभिलेखमा लिच्छिवि सम्वत् ४६४ (अर्थात् ई.सं. ५४२) उल्लेख छ ।

२ ने.सं. ७६० को काठमाडौं ओम्वहाल स्थित शिलालेख (राजवंशी, २०२८)

३ ने.सं. ७५७ को क्वावहालको अभिलेख (Regmi, 1966 pg 69)

४ ने.सं. ६५६ को सुवहाल अभिलेख (Regmi, 1966 pg 3)

५ ने.सं. ६६६ को सुवहाल अभिलेख (Regmi, 1966 pg 6)

६ ने.सं. ७३९ को यनमुगल, पाटनको अभिलेख (Regmi, 1966 pg 55)

७ पं. अमृतानन्द वन्धेले वेलायतका विद्वान् ब्रायन हडसनलाई ने.सं. ९३५ मा लेखी दिनु भएको धर्मकोष संग्रह:मा विभिन्न आकार प्रकारको आधारमा चैत्यलाई ४४ प्रकारमा वर्गीकरण गरिने कुरा उल्लेख भएको छ । (शाक्य हेमराज, २०५० पेज ४८)

८ हाल यी मध्ये दुई चैत्यहरू चोरी भएकोले त्यस स्थानमा नयाँ चैत्य पुनर्स्थापन गरिएको छ ।

९ 'धातु गर्भ' भन्ने शब्द नै अपभ्रंश भई श्रीलंकामा डागोवा भन्ने गरियो । त्यसपछि अंग्रेजहरूले यसैलाई प्यागोडा भन्न थाले ।

१० ...अनुजानामि, भिक्खवे, पञ्च लेणानि - विहारं, अड्ढयोगं, पासादं, हम्मियं, गुह'न्ति। (विनयपिटक - चूल्लवग्गो पाली - सेनासनक्खन्धकं २९४ - अर्थ - न्याथी कथंया वासस्थान च्वनेत अनुमति बिया च्वना - विहार, अध्ययोग, पासाद, हम्मिय व गुहा)

११ १) प्रमुदिता भूमि, २) विमला भूमि, ३) प्रभाकरी भूमि, ४) अर्चिष्मती भूमि, ५) सुदूर्जया भूमि, ६) अभिमूखी भूमि, ७) दुरंगमा भूमि, ८) अचला भूमि, ९) साधुमती भूमि, १०) धर्ममेघा भूमि, ११) समन्तप्रभा भूमि, १२) निरूपमा भूमि, १३) ज्ञानवर्तीवज्रभूमि

१२ स्वयम्भू चैत्यको त्रयोदशभूमि वृताकार गरी बनाएको छ भने हर्मिकाको ठीक माथि पञ्चबुद्धको पञ्चकुल अंकित हर्मिका पत्र (हल:पौ) राखिएको छ ।

१३ पाँच तह भएको श्रावकभूमि चैत्य, सात तह भएको प्रत्येकभूमि चैत्य, बाह्र तह भएको महायानभूमि चैत्य, तेह्र तह भएको लाई वज्रयानभूमि चैत्य भनिन्छ ।

१४ वज्राचार्य हेराकाजी (२०५६) को भनाई अनुसार यस प्रकारका स्थापना स्वपूर्वको अवधारणा अनुसार गरिन्छ । पूजादि कर्मकाण्ड गर्दा वज्राचार्यहरूले आफ्नो अगाडि परेको दिशालाई नै पूर्व मान्ने गर्दछ । यही अनुसार यो चैत्यको अगाडि आमने सामने वसुच्चशील महाविहारलाई मूल अथवा पूर्व दिशा मानी यसरी पूर्वाभिमुख हुनु पर्ने अक्षोभ्य बुद्ध पश्चितिर फर्काई बनाइएको हो । यस अनुसार पूर्वदिशाको दाहिने दक्षिण हुनु पर्ने हो तर यस चैत्यमा दक्षिणाभिमुखम्ह रत्नसम्भव र उत्तराभिमुख अमोघसिद्धिको दिशा अदलवदल गरिएको छैन । केवल अक्षोभ्य र अभिताभ बुद्धको मात्र दिशा अदलबदल गरिएको छ । अरू भनाईहरू अनुसार यो चैत्यको निर्माण पञ्चबुद्धको सिद्धान्त राम्ररी स्थापित नहुँदै निर्माण भएकोले यसरी दिशा फरक हुन गएको हो ।

* * *



# धँल्या:हिति पर्व

✍ सम्पादक

वर्षको श्रावण शुक्ल प्रतिपदा देखि भाद्र शुक्ल प्रतिपदा (गुँलाथ्व पारू देखि यँलाथ्व पारू) सम्म नेवार बौद्धहरूले ठूलो श्रद्धाभावले एक महिना सम्म मनाउँदै आएको सबैभन्दा लामो अवधिको पर्व गुँला पर्व हो । यस महिना भरी परम्परानुसार धेरै चाडपर्व तथा गतिविधिहरू हुन्छन् । गुँला पर्वको महत्त्व के हो ? गुँलामा बहिद्यो प्रदर्शनी प्रथा र धँल्या:हितिको महत्त्व के हो ? यस विषयमा यहाँ चर्चा गरिने छ ।

'गुँला' शब्दको ब्युत्पत्तिका बारेमा विभिन्न विद्वान्हरूको फरक फरक भनाई छन् । नेपाल भाषामा 'गु' को अर्थ 'नौ' अङ्क हो । नवौं महिना भएर यसलाई गुँला भनिएको हो भन्ने भनाई प्रचलनमा छ[1] जुन सन्तोषजनक देखिँदैन (शाक्य, ११९७; वज्राचार्य र., ११९९)। नेवा: परम्परामा कछला देखि महिनाको गणना गरियो भने गुँला दशौं अंकमा पर्न आउँछ । त्यसैले 'गुँ' भन्ने शब्द संख्यावाचक नभई अरु नै कुनै मूलबाट ब्युत्पत्ति भएको हुनु पर्छ । तमोट (२०५४) को लेखमा लिनहार्ड र मानन्धरको नेपालमा हस्तलिखित ग्रन्थ र अभिलेखको सर्वेक्षण गरी लेखेको अनुसन्धानात्मक लेखको[2] आधारमा गुँला शब्दको अभिलेख प्रमाण प्रस्तुत गरेका छन् । गुँलालाई पूर्व प्राचीन काल (ने.सं. ५०१-६) मा 'गुणि', 'गुणिला' र उत्तर प्राचीन काल (ने.सं.५०१-८३१)मा 'गुनला' हुँदै हाल 'गुँला' भनिन थालेको कुरा उल्लेख छ । यदि यो शब्द संस्कृत मूलबाट आएको हो भने 'गुणि' भनेको शब्दको अर्थ 'गुणवान्' हो । पुण्य गर्न उपयुक्त महिना भएकोले 'गुणवान्' महिना भन्ने अर्थमा यस महिनालाई 'गुणि' ला भन्दै 'गुँला' भन्न थालेको हो कि? वा यो शब्द संस्कृतको धातु मूलबाट नभई अरु नै मूलबाट आएको हो कि? यो प्रश्न अझै अन्वेषणकै विषय छ ।

गुँलामा हुने परम्परागत गतिविधिहरू हेर्दा यो विशेष तवरले बौद्धहरूको पर्व जस्तो देखिन्छ यद्यपि यही महिनामा कृष्ण पूजा, भिन्द्यो पूजा आदि पनि पर्दछ । यो महिना किसान समुदायको धान रोप्ने काम सिध्याएर अलिकति आराम गर्ने समयमा पर्छ । यसरी अलिकति फुर्सदको समयलाई पुण्य संग्रह गर्नको लागि पूर्वाचार्यहरूले यसको महत्त्व दर्साई यो पर्वको प्रथा चलाएको देखिन्छ । फेरी अर्को हिसाबले हेर्ने हो भने यो महिना विभिन्न प्राकृतिक प्रकोप अनिष्ट आदिको भय हुने महिना हो । आफू र अरु सबैको भय निवारणको लागि वा प्रकोपबाट वा कालगतिबाट मृत्यु भएकाहरूको सुगति कामना गर्न बौद्ध नेवारहरू पुण्य

संग्रहका विविध गतिविधिहरू गरी पुण्य परिणामना गर्ने गरिआएको छ । यी सबै उद्देश्यका लागि दान शीलादि कुशल[3] संग्रह गरी दश अकुशल[4] आदि छोड्ने अभ्यास गरिन्छ । सर्वसाधारणलाई सद्धर्म अभ्यासमा प्रवेश गराउन प्रभावकारी उपायकौशल्यका रूपमा पनि यो पर्वको व्यवस्था भइरहेको देखिन्छ ।

गुँलामा धेरै पुण्यक्रियाका कार्यक्रमहरू गरिन्छ । गुँला सेवा जाने, धारणी, स्तोत्र, सद्धर्म पाठ आदि गर्ने, बोकि जाने, वाद्यवादन, धर्म देशना, व्रतोपवास, सतु चढाउने, क्वाति खाने, बहापूजा जाने, पिन्पाँ (पिण्डपात्र) चढाउने, बहिद्य: प्रदर्शन गर्ने, बहिद्य: दर्शन गर्न जाने, प्रतिभराण्दो (पौभा) वा विलंपौ प्रदर्शन गर्ने आदि गतिविधिहरू गरिन्छ । यी बाहेक यो महिना भित्रि पञ्जराँ, गुन्हुपुन्हि, धँल्या:, मतया:, बाबुको मुख हेर्ने आदि धेरै चाडपर्वहरू पनि मनाइन्छ ।[5]

**धँल्या हितिको प्रदर्शनी**

गुँलामा हुने माथि उल्लिखित विभिन्न रितिथिति परम्परा मध्ये बहिद्यो प्रदर्शनीको क्रममा प्रथम श्री महाविहार, गुइत: बहीको सलंशालामा प्रदर्शन गरिने धँल्या:हिति पनि एक हो । श्रावण कृष्ण प्रतिपदा अर्थात् धँल्या: को दिन तधँ गुइत: बहिमा प्रदर्शन गरिने धँल्या:हिति लगायत, सर्वानन्द जातक चित्रांकित तुलां पौ, पुरानो सरसामग्री, दीपङ्कर बुद्ध, यस्तै चिधँ गुइत: बहिमा प्रदर्शन गरिने गुइत: अजीको प्रतिमा दर्शन पूजन गर्न काठमाडौं उपत्यकाका धेरै श्रद्धालुहरू यहाँ आउँछन् । प्रथम श्री महाविहारको नामले प्रख्यात तधँगु गुसतल महाविहार (त:धँ बहि) को मूल मन्दिरको पूर्वतिरको सलंशालामा राखिने धँल्या:हिति प्रदर्शनीमा निम्नानुसार बुद्ध बोधिसत्त्वहरू र कलाकृतिहरू राखिन्छ ।

१. **अमोघपाश लोकेश्वर र धँल्याहिति** – काठको आसन र प्रभामण्डल बनाई त्यस आसनको माथि अमोघपाश लोकेश्वर प्रमुख भृकुतीतारा र आर्यतारा देवीको मूर्ति सहित धँल्या:हितिको प्रतिमा प्रदर्शन गरिन्छ । यो अमोघपाश लोकेश्वरलाई जनबोलिमा धर्मराज, यमराज, जमराज भनी सम्बोधन गरिआएको छ । लोकेश्वरको ठीक मुनि एक ओटा धारा (हिति) को प्रतिमा पनि राखिएको हुन्छ । त्यस हितिको हितिमंग (मकर आकारको धाराको मुख) को माथि एकजना वृद्धाको मूर्ति र हितिको दाँयाबाँया भयानक रूप भएका जन्मदूत र कर्मदूत नामक यमदूतहरूको मूर्ति हुन्छ ।

२. **श्री आर्यावलोकेतिश्वरको मूर्ति र वसुजा ज्वलं (परम्परागत सरसामग्री)** – सलंशालाको मध्य भागमा श्री आर्यावलोकेतिश्वरको काष्ठमय प्रतिमासँगै दैनिक जीवनमा चलाउने परम्परागत सरसामग्री जस्तै माना, सुकुण्डा, चुलेसी, टीकादानी (काय्भ:), पूजाथाली (पुजाभ:), समय् पिचा, त्वा:देवा, सन्दुक आदि पनि प्रदर्शनमा राखिन्छ । लोकेश्वरको दाँयाबाँया दुई बुद्धमूर्तिहरू पनि प्रदर्शन गरिन्छ । लोकेश्वर बिसाएको त्वाक:लमा भएको ताम्राभिलेख[6] अनुसार ने.सं. ७८२ चैत्र कृष्ण त्रयोदशीका दिन 'गुस्तु न्हेलछे ननि वन्तागृह लुकना भावो' ले यो त्वाकल सहितको देवताहरू चढाएको र एउटा गुथि स्थापना गरेको उल्लेख छ । यी मूर्तिहरू चोरी भई अहिले त्वाकल मात्र बाँकि छ । पछि बहिलमा नै रहेको लोकेश्वरको मूर्ति यस त्वाकल (आसन) मा प्रदर्शन गर्न थालियो ।

३. **दीपङ्कर तथागत** – यस्तै नै सलंशालाको पश्चिमतिर काठको फ्रेम बनाई बहिद्यो प्रदर्शनी कै लागि मात्र दीपङ्कर तथागतको मूर्ति बनाई प्रदर्शन गरिन्छ । दाँया हातले अभयमुद्रा र बाँया हातले वरद मुद्रामा रहेका दीपङ्कर तथागतलाई दुई किसिमले महत्त्वपूर्ण मानिन्छ । १. शाक्यमुनि तथागत बुद्ध हुनु भन्दा चार असंख्येय र एक लाख कल्प अघि उहाँ सुमेध ब्राह्मण भई जन्म लिनु हुँदा पहिलो पटक दीपङ्कर बुद्धको समक्ष बुद्धत्वको प्रार्थना गर्नुभएको थियो । त्यसबेला नै दीपङ्कर तथागतले सुमेध ब्राम्हण नै पछि



*अमोघपाश लोकेश्वर, आर्यतारा, भृकुटी तारा सहित धँल्या:हिति*



*दीपङ्कर बुद्धको मूर्ति*

शाक्यमुनि बुद्ध हुनेछ भनी भविष्यव्याकरण गर्नु भएको थियो । २. फेरी राजा सर्वानन्द भई जन्म हुँदा दीपङ्कर प्रमुख भिक्षु संघलाई पिण्डपात्र दान गरी दरवारमा नै दीपङ्कर मूर्ति स्थापना गऱ्यो भन्ने घटनाको संस्मरणमा यहाँ दीपङ्कर मूर्ति प्रदर्शन गर्ने चलन चलेको देखिन्छ ।

सलंशालाको प्रदर्शनी बाहेक बहिको पूर्वतिरको भित्तामा ३६ फिट लामो तुलां पौ (लामो बेरिएर राखिने चित्रकला) पनि राखिन्छ । सर्वानन्द नृप जातक कथालाई चित्रांकित गरी यस तुलांपौको पछाडिको भागमा यमलोक र षोडश नरक (१६ प्रकार) को चित्र लेखिएको छ । वसुच्चशील महाविहारको गन्धकुटीको ठीक माथि माथिल्लो तलामा भौतिक रूपले दरिद्र भएपनि शुद्धचित्तले कायकष्टले कमाएको वस्तु दीपङ्कर प्रमुख भिक्षु संघलाई दान गरी उत्तमदान दिनुको उदाहरण हुनु भएका श्रद्धामयी गुइत: अजीको प्रतिमा पनि प्रदर्शन गरिन्छ ।

धँल्या:हिति हेर्न जाने दिन भएर नेवार बौद्धहरूले यो दिनलाई 'धँल्या:' भनी भन्ने गरिन्छ । यस दिन धँल्या:हिति दर्शन गरेको पुण्य अपार हुने विश्वास गरिन्छ । सांकेतिक रूपले भन्ने चलन छ - मृत्योपरान्त यमराजको ठाउँमा न्याय निसाफको लागि लाँदा "तिमीले धँल्या:हिति दर्शन गरेका छौ ?" भनी सोधिन्छ रे । यसरी सर्वसाधारणको मानसमा पूर्वाचार्यहरूले धँल्या:हितिको महत्त्व कम भइ नजाओस् भन्ने हेतुले अनेक रितिथिति बनाई एक अनुपम बौद्ध संस्कृति चलाएको देखिन्छ । त्यसैले यसको महत्त्व बुझेर परम्परा चलाउने गरे त्यसबाट उचित लाभ भई पूर्वाचार्यहरूको उद्देश्य पूर्ण हुन्छ अन्यथा खालि कर्मकाण्ड र रूढिवादी अन्धविश्वासमा नै मात्र सिमित हुन जान्छ । यहाँ चलिआएको प्रचलन तथा जनश्रुति, वंशावली आदि र पूर्व प्रकाशित स्रोत सामग्रीको आधार लिई धँल्या:हितिको महत्त्वलाई नियाल्ने जमर्को गरिएको छ ।

'धर्मञ्जययात्रा हिति' भन्ने शब्द अपभ्रंश भई 'धँञ्जलियाहिति', त्यस पछि 'धँञ्जल्याहिति' हुँदै 'धँल्या:हिति' हुन गएको कुरा पं हेमराज शाक्यको भनाई छ ।[7] वहाँको उद्धरित लेखमा अनुमानित ४ औं शताब्दिमा 'सुगत शासन पक्षपाती'[8] भनी सम्बोधित

राजा वृषदेवले सद्धर्मयात्राको क्रममा त्रिरत्नालोक पुण्यकिर्ति प्रचार प्रसारको अभियान थालेको कुरा उल्लेख छ । त्यस अभियानमा उनले नयाँ वन्देजहरू स्थापना गरी सम्यक् नरां, पञ्जरां र बौद्धकला प्रदर्शनीको रितिथिति पनि स्थापना गरे । त्यही कालको धर्मकीर्तिहरू मध्ये एक धर्मञ्जययात्रा हिति पनि हो । वृषदेव र उनले स्थापना गरेका धर्मकीर्ति सम्बन्धी प्रसङ्ग विभिन्न वंशावलीहरूमा उल्लेख भएको छ ।[9] ती मध्ये राइट वंशावलीको सम्वन्धित अंश अनुवाद गरी निम्नानुसार प्रस्तुत गरिएको छ ।

रूद्रदेव वर्माका सुपुत्र वृषदेव वर्मा अत्यन्त धार्मिक स्वभावका हुन् । उनी दिनका दिन वज्रयोगिनीलाई भोजन दान गरी मात्र आफू भोजन गर्थे । उनले राजा धर्मदत्तद्वारा बनाएको चैत्यलाई जीर्णोद्धार गरे । यस्तै भिक्षुहरू निवास गराउन धरै विहारहरू निर्माण गरे । एक दिन वहाँ सत्ययुगको संस्मरणमा बनाएको महाचैत्यमा[10] दर्शन गर्नका लागि जानुहुँदा त्यहीं स्वास्थ्य बिग्री देहान्त भयो । यमदूतले उनलाई यमलोकमा लगे । यमराजले उनलाई देख्ने वित्तिकै यमदूतहरूलाई गाली गरे - “यस्तो पुण्यवान् राजालाई तिमीहरूले नरकलोक ल्याउने ?” तत्पश्चात् उनलाई फिर्ता पठाइयो र यता मृत राजाको शरीरमा फेरी प्राण फर्क्यो । उनले त्यस नरकमा प्रत्यक्ष देखेका दृष्य र घटना कारण्डब्युह नामक ग्रन्थसँग तुलना गरे । उक्त ग्रन्थमा वर्णन गरिएको र उनले त्यहाँ देखेको विषयवस्तु दुरूस्त भएको देखी उनी अत्यन्त हर्षित भए । श्री पद्मपाणी लोकेश्वर नरकमा गई नरकवासीहरूलाई उद्धार गर्नु हुन्छ भन्ने कुरा उनले ग्रन्थमा पढेको आधारमा उनको यो अभूतपूर्व यमलोक यात्रा गर्न पाएको र पृथ्वीलोक फर्कन पाउनुको सम्पूर्ण श्रय श्री पद्मपाणी लोकेश्वरलाई दिनु भयो । त्यसपछि उनले धर्मराज लोकेश्वरको प्रतिमा र यमान्तक आगम प्रतिष्ठा गराउनु भयो । त्यसपछि उनले भाई वालार्चनदेवलाई त्यहाँ छोडी आफू वन्द्यगाँको पञ्चबुद्ध (चैत्य) स्थानमा बस्न गए । त्यहीं उनको देहान्त भयो ।

वि.सं. १८७७ सालमा अंग्रेजी भाषामा प्रकाशित भएको राइट वंशावलीको नामले प्रख्यात उक्त पुस्तक पाटनका पण्डित श्री गुणानन्दबाट प्राप्त भएको वंशावलीको अनुवाद हो । पं. गुणानन्दको पुर्खाहरू पुस्तौपुस्ता देखि इतिहास संग्रह गर्दै आएका हुन् । राइट वंशावलीमा उल्लेख भएको थुरको प्रदक्षिणा, नरकलोकको दृश्य, धर्मराज लोकेश्वर आदि विषयवस्तु समावेश भएको पाटनमा एउटै मात्र प्रथा छ त्यो हो धँल्या: पर्व । धँल्या: पर्वका दिन श्रद्धालुहरू बिहानै प्रथम प्रहरदेखि नै चार थुर दर्शन पूजन गर्नको लागि घरबाट निस्कन्छन् । ‘प्यँग: थुर कायेगु’ भन्ने नामले सर्वप्रचलित यस यात्रा गऱ्यो भने अप्रमेय पुण्य प्राप्त हुन्छ भन्ने अर्थमा यो यात्रा ‘धर्मञ्जय यात्रा’ भन्ने नामले प्रचलित भयो । हाल यही शब्द अपभ्रंश भई धँल्या: हुन गयो । धर्मञ्जययात्रा अर्थात् धँल्या:को प्रचलित रूट निम्नानुसार छ ।

१. **वाग्मती तीर्थस्नान** – यस धर्मञ्जय यात्रा सुरु गर्न काय, वाक, चित्त शुद्ध हुनुपर्ने भएकोले सबैभन्दा पहिले आफूलाई पायक परेको वाग्मती तीर्थस्थानमा गई स्नान गरिन्छ । पाटनवासी भए शंखमूल जान्छन् ।

२. **इबही थुर** – वाग्मतीमा स्नान पश्चात् द्वापरयुगको संस्मरणमा निर्माण भएको शंखमूलको नजिकै रहेको इबही थुर दर्शन गरिन्छ । यही क्रममा थुरको पूर्वतिर रहेको यम्पि महाविहारमा प्रदर्शनमा राखिने षटाँजु (षट्कोटी आजु) को नामले लोक प्रसिद्ध सुनयश्री मिश्रको प्रतिमा दर्शन गरिन्छ ।

३. **पुच्व थुर** – त्यसपछि कलियुगोदयको संस्मरणमा निर्माण गरिएको पुल्चोकको थुर दर्शन गरिन्छ ।

४. **टंगबहा:को यमद्वार** – त्यसपछि जेष्ठवर्ण महाविहार टंगबहालमा रहेको जटाधारी



*धँल्या:को दिन गुइत:बहिमा दिवंगतको नाममा दीप प्रज्वलन गर्दै श्रद्धालु भक्तजनहरू*

लोकेश्वर दर्शन गरी बहालको पूर्व-उत्तर कुनामा स्थापना गरिएको यमद्वार दर्शन गरिन्छ ।

५. **प्या:पुखू छियें** – त्यसपछि 'प्या:पुखू छिइगु' अर्थात् प्रयागपोखरी तर्नका लागि जान्छ । प्या:पुखूलाई पुरेर अहिले स्कूल भवन निर्माण गरिएको छ । यस दिन धेरै श्रद्धालुहरू आउने भएकोले एक दिनका लागि भएपनि पानी जम्मा पारी पोखरी बनाई पोखरीमा तर्ने व्यवस्था मिलाएको हुन्छ ।

६. **लगँथुर** – त्यसपछि सत्ययुगोदयको संस्मरणमा स्थापना गरिएको लगँथुर (लगनखेल स्तुपा) दर्शन र प्रदक्षिणा गरिन्छ ।

७. **तेता थुर** – त्यसपछि त्रेतायुगोदयको संस्मरणमा स्थापना गरिएको तेताथुर (इमाडोल) दर्शन र प्रदक्षिणा गरिन्छ ।

८. **गुइत:को धँल्या:हिति** – त्यसपछि त:धँगु गुस्तल महाविहार (हाल प्रथम श्री महाविहारको नामले प्रचलित) मा धँल्या:हिति दर्शन र पूजन गरिन्छ । यही क्रममा वसुच्चशील महाविहारमा प्रदर्शन गरिने श्रद्धामयी गुइत: अजीको प्रतिमा दर्शन गरिन्छ ।

यी मध्ये चार थुरहरू, धँल्या: हिति, यमद्वार मृत्यु भएकाहरूको नाममा १०८ दीप प्रज्ज्वलन गरी पुण्यपरिणामना गर्ने पनि चलन छ । वंशावलीमा गुइत: वा टंग:बाहा भनी किटान गरी उल्लेख गरिएको छैन तर यसमा वर्णन गरिएको विषयवस्तु र हालसम्म चलिआएको अद्वितीय परम्परा मिल्न आएकोले धँल्या: हिति प्रदर्शन-दर्शनको प्रथा र राइट वंशावलीको वृषदेव सम्बन्धी उद्धरणको नजिकको सम्बन्ध रहेको देखिन्छ । त्यसैले नै पं. हेमराजले धँल्याहिति प्रदर्शनीको प्रथा वृषदेवको पालादेखि चलिआएको भनी उल्लेख गरेको हो ।

**धँल्याहिति प्रदर्शनीको दार्शनिक पक्ष**

'धँल्या:हिति दर्शन गरे मृत्योपरान्त स्वर्गको मार्ग सोझिन्छ ।', 'यमराजले धँल्या:हिति दर्शन गरेको छ ? भनी सोध्नेछ' आदि प्रसङ्गबाट धँल्या: हिति मार्फत जनसाधारणलाई ध्यानाकर्षण गराइएको छ । यस प्रदर्शनी र दर्शन गर्न जाने परम्पराबाट जनसाधारणलाई के कसरी प्रत्यक्ष लाभ भइरहेको छ त? यो पनि विचारणीय छ ।

यस सम्बन्धमा प्रचलित एक जनश्रुति प्रस्तुत छ । मानिस मरणासन्न भइरहेको बेला र मानिसको

हंस अथवा चित्तलाई घुमाउन लान्छ भन्ने भनाइ छ जसलाई 'सि चाहिके यंकिगु' भनी जनबोलीमा प्रचलित छ । यसरी घुमाउन लगिने विविध स्थानहरू मध्ये पानी बगिरहेको स्थान अथवा धारा एउटा पनि पर्दछ । जन्मदूत र कर्मदूतहरूले त्यस मानिसलाई साँच्चै नै मरण हुने बेला भएको हो ? वा होइन ? भनी परिक्षण गर्न त्यस धारामा लग्छ । यदि मरण हुने बेला भएको भए त्यस हितिको पानी खाने अनुमति दिइन्छ, अन्यथा ढोकैबाट फर्काइदिन्छ । यो निर्णय गर्न एक जना महिला आकृतिका सत्त्व त्यहाँ तैनाथ भइरहेको हुन्छ । यदि पानी खायो भने त्यस व्यक्ति त्यही समयमा मृत्यु हुन्छ, अन्यथा मृत्यु नभई फेरी ब्युँझिन्छ। डाक्टर वैद्यले मृत धोषणा गरे पश्चात् आश्चर्यपूर्वक मानिसहरू फेरी ब्युँझिने घटना बेलाबेलामा सुन्न पाइन्छ । यसरी मरे पछि फेरी ब्युँझेकाहरूले हिति वा पानी देखें भनी संस्मरण सुनाएका कुरा पनि सुन्न पाइन्छ । यसरी देख्यो भन्ने कुरा मात्र संयोग हो कि ? या यो एक नियम नै हो ? जे सुकै भए पनि यो जनविश्वासको आधारमा प्रथा चलिआएको कारण हजारौं जनसाधारणहरू यहाँ दर्शन गर्न आउँछन् । यो प्रदर्शनीबाट जनसाधारणलाई के कस्तो शिक्षा दिइरहेको छ भन्ने बारे पनि केही चर्चा गरिनेछ ।

**१. मरणानुस्मृति (मर्नुपर्छ भन्ने बारे होस राखी राख्ने)** – दर्शन गर्न आउने श्रद्धालुहरू कतिपयले यो प्रदर्शनीमा देखाइने हितिबाट पानी नआएको देखेपछि "यो धँल्या: हिति हो र ? कि ध्वँला (छकाउने) हिति हो ?" भनी ब्यङ्ग गरी जाने पनि हुन्छन् । यो विचारशील व्यक्तिहरूबाट गरिने एक स्वाभाविक संन्देह हो । यही वार्तालापको क्रममा यससँग जोडिएका किंवदन्ती, जनश्रुतिहरू सुनाउने र सुन्ने गरिन्छ । यी जनश्रुति किंवदन्तीहरूको एक अप्रत्यक्ष सन्देश मरणानुस्मृति हो । हामी एक दिन मर्नु पर्छ । मर्ने बेला यस्तो हितिमा पानी खुवाउन लग्छ । मृत्यु हुने समय भइसकेकाहरूलाई पानी खुवाउँछ, अन्यथा आयु बाँकी रहेको हुन्छ । तर अलिक अघि वा अलिक पछि मृत्यु त निश्चित छ । मृत्यु एक नित्य धर्म हो । यसरी धँल्या:हिति दर्शन मार्फत तत्क्षणको हुने लाभ भन्नु मरण सम्बन्धी होस ल्याई दिने हो । दैनिक दिनचर्या र लोकधर्मको भुमरीमा परी मनिसहरू मर्नु पर्छ भन्ने सत्य नै बिर्सिने वा कसैले सम्झाई दिए पनि स्वीकार गर्न नसक्ने हुन्छन् । यही कारणले लोभ, लालच, कपट, क्रोध, घात-प्रतिघातको बीचमा नै अल्झेर जीवन पर्यन्त दु:ख भोग गरिरहेका हुन्छन् । मरणानुस्मृतिमा रही मरण धर्मलाई स्वीकार गर्ने स्वभाव भयो भने संसारको दु:खबाट उम्किने मार्ग भेट्टाउँछ । भगवान् बुद्धले दिनुभएको मरणानुस्मृतिको उपदेशको बीउ सर्वसाधारणको हृदयमा राप्ने उपायकौशल्यका रूपमा यो प्रथा चलिआएको हो ।

**२. कर्म र कर्मफलको ज्ञान** – जनबोली अनुसार अमोघपाश लोकेश्वरलाई धर्मराज, यमराज, जमराज, जरमराज आदि शब्दबाट सम्बोधन गरिआएको छ । धर्मराज पाप र धर्मको निसाफ गर्ने देवता हुन् । मानिसहरू बाँचुञ्जेल अनेक सुकर्म र कुकर्म गरिरहन्छ अनि त्यही अनुरुपको फल भोग गरिरहन्छ । यो कर्म र कर्मफलको चक्र बाँचुञ्जेल मात्र भोग गरेर पुग्दैन । मृत्योपरान्त पनि धर्मराजको अघि निसाफ हुन्छ भन्ने जनविश्वास छ । यो भन्नु मृत्यु पश्चात् पनि कर्म विपाकका नियति अवश्य भोग गर्नु पर्छ । कोही चलाख धूर्त व्यक्तिहरूले देशको कानून र न्यायालयलाई समेत छल गरेर वा फकाएर आफूले भोग्नु पर्ने कानूनी सजायबाट बचेर आफूले आफैलाई पुरूषार्थी ठानीरहेको हुन्छ । तर त्यसको हिसाब किताब धर्मराजको अगाडि त अवश्य हुन्छ अर्थात् कर्म र कर्मफलको नियमानुसार सुगतिमा जन्म लिने वा दुर्गति (प्रेत, पशु र नरक) मा जन्म लिने भन्ने निर्णय हुन्छ । नरक मात्रै पनि विभिन्न प्रकारका छन् । विभिन्न तातो नरक देखि विभिन्न चिसो नरकहरू छन् । कर्मको प्रकृति अनुसार उनीहरूले भोग गर्नु पर्ने हुन्छ । १६ प्रकारको नरकको

कुरालाई त:धँ गुइत: बहिलमा प्रदर्शन गरिने तुलाँपौको सबैभन्दा पछिल्लो भागमा चित्रांकित गरिएको छ । यी सबै विषयवस्तुबाट कर्म र कर्मफलको उत्तम शिक्षा दिने गर्दैआएको छ । कर्म र कर्मफलको चक्र नै संसारको मूल हेतु हो । जस्तो बीउ रोप्यो त्यस्तै बिरुवा उम्रिने हो, त्यस्तै नै जस्तो कर्म गर्यो त्यस्तै नै विपाक फल आउँछ । कर्म व्यक्तिको छनोटबाट हुन्छ तर कर्मको फल निश्चित प्रकृतिको नियम अनुसार हुन्छ । कर्मफलमा व्यक्तिको छनोटको अवसर हुँदैन, मात्र भोग गर्ने हुन्छ, जसलाई दुर्दशा भनी भनिन्छ । कतैबाट पनि कर्मविपाक फलबाट बच्न सक्दैन । आफ्नो कर्मको मालिक आफै हो । त्यसैले कर्म गर्नमा होस् राख्नु पर्छ, होस् राख्न नसके विपाक रूपी दशा पछिपछि आई दु:ख दिइ नै रहन्छ । त्यसैले गर्न नहुने दश अकुशललाई स्पष्ट रूपमा चिनी त्यसलाई छोड्नु पर्छ र दशकुशल चर्या गर्नु पर्छ । गुइत: बहिमा प्रदर्शन गरिने तुलाँ पौको पहिलो चित्र नै भगवान् बुद्धले भिक्षु संघलाई दशकुशलाकुशलको उपदेश दिनु भएकोबाट सुरु गरेको यहाँ उल्लेखनीय छ ।

३. **बोधिसत्त्व अभ्यास** – यहाँ प्रदर्शन गरिने अमोघपाश लोकेश्वरलाई नै धर्मराज भनी सम्बोधन गर्दै आएको प्रथा अज्ञानताको कारणले त्रुटि भइरहेको हो कि भन्ने लाग्न सक्छ । तर राइट वंशावलीमा राजा वृषदेवले धर्मराज लोकेश्वरको प्रतिमा र यमान्तकको आगम प्रतिष्ठापन गऱ्यो भन्ने प्रसङ्ग हेरेपछि लोकेश्वरलाई यमराज रूपले पूजाभाव गरेको प्रसङ्गबाट त्यसरी भन्ने गरेको हो भन्ने महशुस भयो । धँल्या:हिति दर्शन गरेर करूणामयको चर्या, बोधिसत्त्व अभ्यासको ज्ञान[11] लिनको लागि पनि निमित्तका रूपमा उपयोगी हुन्छ ।

४. **उदार चित्त स्वभाव विकास गर्ने** – यहाँ प्रदर्शन गरिने दीपङ्कर बुद्ध, गुइत: अजीको प्रतिमा आदि सबै दर्शन गरी तुलाँ पौको कथा पढ्को, सुनेको प्रभावले उदार चित्त उत्पन्न गराउने हेतु हुनसक्छ । यसले गर्दा प्रत्यक्षरूपले मात्सर्य (कपटी हुनु) भावलाई नाश गर्छ । अझ दानपारमिता धर्म अनुसार अभ्यास गर्नका लागि उत्प्रेरणा लिने उद्देश्य राखी धँल्या:हिति दर्शन गर्ने गर्दा शून्यता ज्ञान अवबोध भई बोधिरत्नसम्म लाभ गर्नका लागि हेतु हुन्छ ।

बहिद्यो दर्शन गर्ने क्रममा गुइत: बहिको धँल्या: हितिको दर्शन पूजन गरी अनन्त पुण्य लाभ हुन्छ भनिएको पूर्वाचार्यहरूको कथन यसै होइन । चार थुर प्रदक्षिणा गरी, यमद्वार दर्शन गरी, प्यापुखू तरेर, धँल्या:हिति दर्शन गर्ने यात्रालाई नै 'धर्मञ्जययात्रा' अर्थात् 'धर्म हासिल हुने यात्रा' भनी भनिएको हो । अनित्य, दु:ख, अनात्मा रुपी त्रिलक्षणलाई अवबोध गरी, प्रतीत्यसमुत्पाद हेतुफल ज्ञान, क्लेश निर्मूल गरी, सम्येक दृष्टिमा प्रतिष्ठापित भई सुविशुद्ध बोधिलाभको लागि केही हेतु हुने हिसाबले यो यात्रा गर्ने हो भने यो यात्रा नाम अनुसार नै सार्थक हुन्छ । यसको महत्त्वलाई विचार नगरी यसै मात्र घुम्न जाने गर्दा यो यात्रा 'धर्मञ्जय यात्रा' हुँदैन । धर्मञ्जय यात्रा हिति लगायत सबै अन्य स्थलहरू दर्शन गरेको कारणले मरणानुस्मृति जागृत होस्, कर्म र कर्मफल सम्बन्धी मिथ्यादृष्टि निर्मूल होस्, लोकेश्वर तारादेवीको आनुभावले बोधिसत्त्व चर्यामा प्रस्थान हुन सकोस् र दानपारमितादि उत्तम धर्म वृद्धि गरी सम्बोधि सम्म लाभ गर्ने मार्ग प्राप्त होस् ।

### सन्दर्भ स्रोत सूची


तमोट काशीनाथ, २०५४ वि.सं., नेपाल सम्वत् महिनाको नाम, समाचारपत्र दैनिक २०५४ कार्तिक १६ गते शनिवार पृ.११

शाक्य पं. हेमराज, ११९७ ने.सं., गुँला धर्मया महत्व व थ्वया ज्याझ्व:, तारेमाम संघ, नागवाहा, यल। https://archive.org/details/GunlaDharmayaMahatvaThwayaJyajhva HemrajShakya

शाक्य पं. हेमराज, ११९८ ने.सं., धर्मञ्जय यात्रा हिति (धँल्या:हिति) या महत्त्व, गुस्तल लसता पौ, दीपावती

पुस्तकालय, यल

शाक्य ज्ञानेन्द्र, ११२२ नें.सं., गुँला बहिद्यो प्रदर्शनी सन्दर्भः धँल्याहिति र गुइतः अजी, आनन्दभूमि वर्ष ३० अंक ४.

शाक्य ज्ञानेन्द्र, ११३० ने.सं., श्री अमोघपाश लोकेश्वर धर्मागार म्हसिका-पौ, गुइतः बहि विहार संघ, यल ।
https: //archive=org/details/AmoghpashaLokeshvara TempleAtGuitabahi/mode/2up

वज्राचार्य धनवज्र, २०५३ वि.सं., लिच्छिविकालका अभिलेख, एशियालि अनुसन्धान केन्द्र, त्रिभुवन विश्वविद्यालय

वज्राचार्य रत्नकाजी, १११९ ने.सं., गुँला धर्म ?, श्रीमती सानु नकःमि, यैं
https://archive.org/details/GunlaDharmaRatnaKaji Vajracharya

वज्राचार्य हेराकाजी, १११९ ने.सं., गुइतःया वहि विहार संघ - छगू अध्ययन, दीपावती पुस्तकालय, यल (अनलाइन डाउनलोड उपलब्ध द)
https://archive=org/details/GuitaBookHerakajiBajracharya

Bajracharya Ranjana, 2000. Jesthavarna Mahavihara of Lalitpur: History and Evolution. In Contributions to Nepalese Studies Vol 27 No 2 (July), pp 245-258, CNAS, TU

Thapa Dr. Shanker, 2001. History Of Nepalese Buddhism: From Mythological Tradition To The Lichhavi Period in Voice of History, Vol= XVI, No 2, Dec, 2001 [available Online]
https://www=nepjol=info/index=php/VOH/article/ view/76/69

Wright Daniel (ed), 1983. Nepal History of the country and people, Translated from Parbatiya, by Munshi Shew Shunker Singh Pandit Shri Gunanand, Cosmos Publication, New Delhi Calcutta: Sushil Gupta and Company, 1958 [available Online]
https://ia800300=us=archive=org/20/items/HistoryOfNepal/HistoryOfNepaldanielWright=pdf

**पादटिप्पणी**

1 नेवारी भाषामा 'गु' भनेको नवौं अङ्क हो । "नेपा:या न्हापांगु महिना थिलां निसेँ ल्या: खायेवले च्याला फुना गुला क्यँ वइगु महिना जुया थ्व महिनायात 'गुँला' धका धाइगु जुल ।" भनी पं. हेमराज शाक्य र रत्नकाजी वज्राचार्यहरूले आफ्नो किताबमा लेखेको छ । यो भनाईमा ज्योतिषविज्ञहरू सहमत छैन । नेवार परम्परामा महिनाको सुरुवाट कछलाबाट हुन्छ । त्यस अनुसार गन्ती गर्दा गुँला दशौं महिनामा पर्न जान्छ ।

2 Nepalese Manuscripts. Pt. 1 : Nevārī and Sanskrit. Staatsbibliothek Preußischer Kulturbesitz by Siegfried Lienhard, Thakur Lal Manandhar

3 दश पुण्य क्रिया भनेको दश ओटा राम्रा कर्महरू हुन् । ती हुन् - १. उदार चित्तले दान दिनु, २. शील - शरीर वचनलाई संयम गर्नु, ३. भावना - चित्तलाई वसमा राख्नु, ध्यान गर्नु, ४. पुण्यदान गर्नु, ५. पुण्यानुमोदन - अरूले गरेका पुण्य प्रति खुसी हुनु, ६. वेयावच्च - परसेवा गर्नु, ७. अपचायन - सत्कार गर्नु, ८. देशना - धर्मका कुरा बताउनु, ९. श्रुति - धर्मका कुरा सुन्नु, १०. दिट्ठिजुकम्म - सम्यक दृष्टिमा रहनु ।

4 दश अकुशल भनेको दश ओटा पाप कर्महरू हुन् । १. अविध्या - परवस्तुमा लोभ गर्नु, २. व्यापाद - क्रोध गर्नु, ३. मिथ्यादृष्टि - गलत धारणा ४. मृषावाद - झूटो कुरा गर्नु, ५. पैशुन्यवाद - चुक्लि गर्नु, ६. पारूष्यवाद - कटु वचन बोल्नु, ७. सभिन्नप्रलाप - नचाहिने गफ गर्नु, ८. प्राणातिपात - प्राणि हत्या गर्नु, ९. अदत्तादान - चोरी गर्नु, १० काम मिथ्याचार - व्यभिचार गर्नु

5 यस सम्वन्धमा विस्तृत ब्याख्या वज्राचार्य रत्नकाजी, १११९ ने.सं., गुँला धर्म ?, व शाक्य पं. हेमराज, १११७ ने.सं., गुँला धर्मया महत्व व थ्वया ज्याझ्वः मा हेर्नुस् ।

6 हेराकाजी वज्राचार्य, १११९ ने.सं., गुइतःया बहि विहार संघ - छगू अध्ययन पेज ६४ मा ताम्राभिलेखको पूर्णपाठको लिप्यन्तर प्रकाशित भएको छ । (अनलाइन डाउनलोड उपलब्ध छ)
*https://archive=org/details/GuitaBookHerakajiBajracharya*

7 पं. हेमराज शाक्य, १११८ ने.सं., धर्मञ्जय यात्रा हिति (धँल्याः हिति) या महत्व, गुस्तल लसता पौ, दीपावती पुस्तकालय, यल

8 पशुपतिया जयदेव द्वितीयाको अभिलेख - धनवज्र वज्राचार्य, २०५३ वि.सं., लिच्छिविकालका अभिलेख पे.नं. ५४९ - 'सुगतशासन पक्षपाती' भन्ने शब्दको अर्थ 'बुद्धधर्मको महान् अनुयायी' हो।

9 Daniel Wright (ed.), 1983; Bajracharya Ranjana (2000)

10 यो चैत्य ललितपुरको लगँ थुर हो ।

11 ज्ञानेन्द्र शाक्य, ११३० ने.सं., श्री अमोघपाश लोकेश्वर धर्मागार म्हसिका-पौमा अमोघपाश लोकेश्वर र तारादेवीहरूको विषय वर्णन गरिएको छ । (अनलाइन डाउनलोड उपलब्ध छ)
*https://archive=org/details/AmoghpashaLokeshvara TempleAtGuitabahi/mode/2up*

* * *